॥ श्री गणेशाय नमः ॥

ॐ

श्री परमात्मने नमः

ॐ तत्सद्ब्रह्मणे नमः

॥ अथ ॥

# ॥ गौतमस्मृतिः वा गौतमधर्मसूत्राणि ॥
# (गौतमस्मृति वा गौतमधर्मसूत्र)

## ॥ प्रथमोऽध्यायः ॥
## (पहिलो अध्याय)

### । अथाचारवर्णनम् ।
### (आचार)

**ॐ वेदो धर्ममूलम्॥ तद्विदां च स्मृतिशीले॥ दृष्टो धर्मव्यतिक्रम साहसञ्च महतां, न तु दृष्टोऽर्थो वरदौर्बल्यात्, तुल्यबलविरोध विकल्पः ॥१॥**

(चार वटै) वेद धर्मका मूल (प्रमाण) हुन् । ती (चार वेद) जान्ने (मनु आदि), स्मृति एवं (तिनको धर्मानुसारको) आचरण वा शीलस्वभाव (पनि धर्मका प्रमाण हुन्) । महान व्यक्तिहरूमा पनि (बेलाबेलामा) धर्मको अतिक्रमण र त्यसमाथि अत्याचार गर्ने आदत देखिएको छ । उत्तम व्यक्तिहरूको कमजोरीका कारण यी जीवनको लक्ष्यलाई पर्दापछाडि लगी दिन्छन् । दुई बराबर बलिया विचार बाझिएमा तीमध्ये एकलाई अपनाउनु पर्ने हुन्छ ।

**उपनयनं ब्राह्मणस्याष्टमे नवमे पञ्चमे वा काम्यं, गर्भादिः सङ्ख्या वर्षाणां, तद् द्वितीय जन्म । तद्यस्मात् स आचार्यो वेदानुवचनाच्च । एकादशद्वादशयोः क्षत्रियवैश्ययोः । आ षोडशाद् ब्राह्मणस्यापतिता सावित्री द्वाविंशते राजन्यस्यद्व्यधिकाया वैश्यस्य ॥२॥**

ब्राह्मणको व्रतबन्ध आठौं वा नवौं वर्षमा गर्नु पर्दछ । वर्षको गणना गर्भबाट शुरु गर्नु पर्दछ । त्यो उसको दोश्रो जन्म हो । व्रतबन्ध गरिएको बालकलाई शिष्यको रुपमा ग्रहण गरी वेदको उपदेश दिने हुनाले उनलाई आचार्य भनिन्छ । एघार र बाह्र वर्षमा क्रमशः क्षत्रिय र वैश्यको व्रतबन्ध हुन्छ । सोह्र वर्षको उमेरसम्म ब्राह्मण गायत्री-पतित हुँदैन, बाईस वर्षसम्म क्षत्रिय र त्यसभन्दा दुई वर्ष बढी अर्थात् चौबीस वर्षसम्म वैश्य गायत्री-पतित हुँदैन ।

**मौञ्जीज्यामौर्वीसौत्र्यो मेखलाः क्रमेण, कृष्णरुरुवस्ताजिनानि, वासांसि शाणक्षौमचीरकुतपाः, सर्वेषां कार्पासं वा विकृतम् । काषायामप्येके । वार्क्षं ब्राह्मणस्य माञ्जिष्ठाहारिद्रे इतरयोः, बैल्वपालाशौ ब्राह्मणस्य दण्डावश्वत्थपैलवौ शेषे, यज्ञिया वा सर्वेषामपीरिता यूपचक्राः सवल्कला मूर्द्धललाटनासाग्रप्रमाणाः ॥३॥**

ब्राह्मण, क्षत्रिय र वैश्यको क्रमशः मुज, ताँदो र कपासको डोरीको कन्दनी हुन्छ । कृष्णमृग, रुरुमृग र बोकाको छालाको क्रमशः प्रयोग हुन्छ । सनको कपडा, आलसको कपडा र च्याङ्ग्राको भुत्ला (वा कुश)को कपडाका क्रमशः वस्त्र हुन्छन् । अथवा सबैका लागि कपासका नरङ्गाइएका वस्त्र हुन्छन् । कसैको मत गेरुवस्त्र हुनु पर्दछ भन्ने पनि छ । ब्राह्मणको वस्त्र रुखको बोक्राले तथा अन्य दुईका वस्त्र क्रमशः मजीठो र हलेदोले रङ्गाइएको हुनु पर्दछ । ब्राह्मणको दण्ड बेल वा पलाशको र बाँकीको क्रमशः पीपल र कुम्भी (पीलु)को अथवा सबैका लागि यज्ञमा मौलो बनाउन योग्य कुनै पनि रुखको हुन्छ भनिएको छ । यी दण्ड बोक्रा सहितका हुनु पर्दछ । यिनको नाप क्रमशः शीर, निधार र नाकको अघिल्लो भागसम्म पुग्ने हुनु पर्दछ ।

**द्रव्यहस्त उच्छिष्टोऽनिधायाचामेद् द्रव्यशुद्धि, परिमार्जनप्रदाहतक्षणनिर्णेजनानि तैजसमार्त्तिकदारवतान्तवानां, तैजसवदुपलमणिशङ्खशुक्तीनां, दारुवदस्थिभूम्योरावपनञ्च भूमेश्चैलवद्रज्जुविदलचर्मणामुत्सर्गो**

**वात्यन्तोपहतानाम् ॥४॥**

कुनै वस्तु हातमा लिइरहँदा अपवित्र भए त्यो वस्तु जमिनमा नराखी आचमन गर्नू, यसैले वस्तुको शुद्धि हुन्छ । धातुका वस्तु माझेर, माटाका वस्तु बालेर, काठका वस्तु ताछेर तथा धागोका वस्तु धोएर शुद्ध हुन्छ । पत्थर, मणि, शङ्ख र सीपिका वस्तु धातुकोझैं गरी शुद्ध हुन्छ । हाडका सामान र भूमिको शुद्धि काठको सरह हुन्छ र भूमि चार्हीं भरेर शुद्ध हुन्छ । डोरी र बाँस तथा छालाका सामानको शुद्धि कपडाकोझैं हुन्छ । जुन वस्तु अती मैलो छ त्यसलाई फाल्नु पर्दछ ।

**प्राङ्मुख उदङ्मुखो वा शौचमारभेत । शुचौ देश आसीनो दक्षिणं बाहुं जान्वन्तरा कृत्वा यज्ञोपवीत्या मणिबन्धनात् पाणी प्रक्षाल्य वाग्यतो हृदयं स्पृशंस्त्रिश्चतुर्वाप आचामेद् द्विः प्रमृज्यात् पादौ चाभ्युक्षेत्, खानि चोपस्पृशेच्छीर्षण्याणि, मूर्द्धनि च दद्यात् ॥५॥**

पूर्व वा उत्तरतिर फर्की शौच शुरु गर्नू । पवित्र स्थानमा बसी दाहिने हात घुँडाभित्र गरी जनै लगाएर शौच शुरु गर्नू । (शौचपछि) पाखुरासम्म दुवै हात धोई, नबोली, हृदयलाई स्पर्श गर्दै तीन वा चार पटक आचमन गर्नू, दुई पटक पानीले गोडा धुनू । टाउकामा भएका इन्द्रियलाई जलले स्पर्श गर्नू र टाउकामा पनि जल छर्कनू वा हाल्नू ।

**सुप्त्वा भुक्त्वा क्षुत्वा च पुनः । दन्तश्लिष्टेषु दन्तवदन्यत्र जिह्वाभिमर्षणात् । प्राक्च्युतेरित्येके । च्युतेष्वास्रावविद्विद्यान्निगिरन्नेव तच्छुचिः । न मुख्या विप्रुष उच्छिष्टं कुर्वन्ति न चेदङ्गे निपतन्ति । लेपगन्धापकर्षणे शौचममेध्यस्य । तदद्भिः पूर्वं मृदा च मूत्रपुरीषरेतोविस्रं सनाभ्यवहारसंयोगेषु च, यत्र चाम्नायो विदध्यात् ॥६॥**

सुतेर उठेपछि, खाएपछि र हाच्छिउँ गरेपछि पुनः आचमन गर्नू । दाँतका बीचमा अड्किएको कण, टुक्रा आदि यदि जिब्रोले छोइरहेको छैन भने दाँत समान नै शुद्ध सम्झिनु पर्दछ । केही स्मृतिकारको मतमा त्यो दाँतबाट बेग्लै हुनुभन्दा अघिसम्म मात्र यस्तो सम्झिनु पर्दछ भन्ने छ । दाँतबाट छुट्टिएपछि त्यसलाई थुक वा र्‍याल समान नै (अशुद्ध) जान्नू । निलेपछि मात्र मुख शुद्ध हुन्छ । मुखबाट खस्ने थुकका छिटा शरीरमा नपरे त्यसले शरीरलाई जुठो पार्दैन । अपवित्र वस्तुको लेप वा दुर्गन्धलाई निखार्दा नै शुद्ध हुन्छ । यसैले मलमूत्र त्यागेपछि, वीर्यस्खलन हुँदा र भोजन आदिको संयोगका बेलामा सबभन्दा पहिले जल र माटोले शुद्धि गर्नु तथा जहाँ जहाँ पनि शास्त्रले यसो गर्ने आदेश दिन्छ त्यहाँत्यहाँ पनि यसको यही विधान गर्नू ।

**पाणिना सव्यमुपसंगृह्याङ्गुष्ठमधीहि भो इत्यामन्त्रयेत गुरुः । तत्र चक्षुर्मनः प्राणोपस्पर्शनं दर्भैः प्राणायामस्त्रयः पञ्चदशमात्राः प्राक्कूलेष्वासनञ्च ॐ पूर्वा व्याहृतयः पञ्चसप्तान्ताः । गुरोः पादोपसंग्रहणं प्रातर्ब्रह्मानुवचने चाद्यन्तयोरनुज्ञात उपविशत् प्राङ्मुखो दक्षिणतः शिष्य उदङ्मुखो वा सावित्रीञ्चानुवचनमादितो ब्रह्मण आदाने ॐकारस्याऽन्यत्रापि अन्तरागमने पुनरुपसदनं श्वनकुलसर्पमण्डूकमार्जाराणां त्र्यहमुपवासो विप्रवासश्च प्राणायामा-घृतप्राशनञ्चेतरेषाम् । श्मशानाध्ययने चैव चैवम् ॥७॥**

गुरुले शिष्यको देब्रे हातको बूढी औंला आफ्नो हातले समातेर 'बाबु पढ" भन्नू । शिष्यले गुरुमा मन र आँखा लगाउनू । कुशले हृदय छुनू । तीन प्राणायाम गर्नू । प्राणायाम पन्ध्र मात्रासम्मको हुन्छ । बिहान र वेद पढ्नु अघिपछि गुरुको चरणस्पर्श गर्नू । ॐ पहिले उच्चारण गर्ने पाँच वा सात व्याहृतिहरु हुन्छन् । गुरुको आज्ञा लिई शिष्यले वेदाध्ययनका लागि गुरुको दाहिनेतिर पूर्व वा उत्तर फर्केर बस्नु पर्दछ । गायत्री मन्त्र जप्दा, उपदेश दिँदा, वेदको अध्ययन गर्दा तथा अन्यत्र पनि शुरुमा प्रणव (ॐ) को उच्चारण गर्नू । वेद अध्ययनको लागि बसेका समयमा कुकुर, न्याहुरीमुसो, सर्प, भ्यागुतो र बिरालो बीचबाट गए भने तीन दिन उपवास गर्नू र गुरुबाट टाढा रहनू । अरु

जनावरले यसो गरे प्राणायाम गरी घिउ खानू । मसानमा वेद पढे पनि यसै गर्नू ।

॥ इति गौतमीये धर्मशास्त्रे प्रथमोऽध्यायः ॥१॥
॥ गौतमीय शर्मशास्त्र, पहिलो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-०+७=७
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ७



## ॥ अथ द्वितीयोऽध्यायः ॥
## (दोश्रो अध्याय)

### । अथ ब्रह्मचारिधर्मवर्णनम् ।
### (ब्रह्मचारीको धर्म)

**प्रागुपनयनात् कामचारवादभक्षोऽहुतोऽब्रह्मचारी यथोपपादमूत्रपुरीषो भवति नास्याचमनकल्पो विद्यतेऽन्यत्रापमार्जनप्रधावनावोक्षणेभ्यो न तदुपस्पर्शनादशौचं नत्वेवैनमग्निहवनबलिहरणयोर्नियुञ्ज्यान्न ब्रह्माभिव्याहारयेदन्यत्र स्वधानिनयनात्॥१॥**

उपनयन गर्नुअघि बालक इच्छा अनुसार गर्न, बोल्न र खान सक्दछ । न उसलाई होम गर्नु पर्ने हुन्छ न त ब्रह्मचर्यका नियम नै पालना गर्नु पर्ने हुन्छ । उ सुविधा अनुसार मलमूत्र त्याग गर्न सक्ने हुन्छ । शरीर माड्ने, धुने र नुहाउने बाहेक उसलाई आचमनको पनि कुनै नियम हुँदैन । उसलाई छुवाछूत बार्नु पर्दैन र जूठोसुतक पनि लाग्दैन । उसलाई अग्निहोम र बलिहरण (अरु जीवलाई खुवाउने काममा) मा नलगाउनू । पितृलाई पिण्डदान दिने बेलामा बाहेक अरु बेलामा उसलाई वेद-मन्त्रको उच्चारण गर्न पनि नलगाउनू ।

**उपनयनादिनियमः । उक्तं ब्रह्मचर्यमग्नीन्धनभैक्षाचरणे**

**सत्यवचनमपामुपस्पर्शनम् । एके गोदानमिति ॥२॥**

गुरुले ब्रह्मचर्यका बारेमा जे जे उपदेश दिएका छन् त्यसको पालना गर्नु व्रतबन्धको नियम हो । यज्ञको अग्नि बाल्नू । भिक्षा मागेर लेराउनू । साँचो बोल्नू । आचमन गर्नू । केही स्मृतिकारहरु गोदान (मुण्डन) बाट नै यी नियमको पालना गर्नुपर्ने विधान पनि बताउँदछन् ।

**बहिः सन्ध्यार्थश्चातिष्ठेत् पूर्वामासीतोत्तरां सज्योतिष्या ज्योतिषो दर्शनाद्वाग्यतो नादित्यमीक्षेत ॥३॥**

(ब्रह्मचारीले) सन्ध्योपासनाका लागि गाऊँबाहिर जानू । बिहानको सन्ध्या उभिएर र बेलुकीको सन्ध्या साँझको उज्यालोमा तारा नदेखिएसम्म वाणीलाई संयमित पारी बसेर गर्नू । सूर्यलाई नहेर्नू ।

**वर्जयेन्मधुमांसगन्धमाल्यदिवास्वप्नाञ्जनाभ्यञ्जनयानोपानच्छत्रकामक्रोधलोभमोह-वाद्यवादनस्नानदन्त धावनहर्षनृत्यगीतपरिवादभयानि, गुरुदर्शने कर्णप्रावृतावसक्थिकायाश्रयणपादप्रसारणानि, निष्ठीवितहसितविजृम्भिता- स्फोटनानि स्त्रीप्रेक्षणालम्भने मैथुनशङ्कायां द्यूतं हीनवर्णसेवामदत्तादानं हिंसामाचार्यतत्पुत्रस्त्रीदीक्षित नामानि, शुष्कां वाचं मद्यम् ॥४॥**

उसले (ब्रह्मचारीले) मह, मासु, गन्ध, माला, दिनको सुताइ, गाजल, मालिश, वाहन, जुता, छाता, काम, क्रोध, लोभ, मोह, बाजा बजाई, (शृङ्गारका लागि) स्नान, दाँत मझाई, उत्सव, नाच, गान, निन्दा र डरलाई छोड्नू । गुरुका अगिल्तिर कानको असावधानी, गोडा दोबारेर वा यस्तै शरीरका अरु अङ्गको सहारा लिएर वा गोडा पसारेर बस्न छोड्नू । थुक्न, हाँस्न, हाई गर्ने, शरीरका कुनै अङ्गमा हिर्काएर बजाउन, मैथुनको नजरले स्त्रीलाई हेर्न वा छुन, जुवा खेल्न, हीन वर्णका व्यक्तिको सेवा गर्ने, नदिइकन कुनै वस्तु लिन, हिंसा गर्ने, आचार्य-आचार्य पुत्र- आचार्य पत्नी तथा दीक्षा ग्रहण गर्नेहरुको नाम लिएर बोलाउन, रुखो स्वरले बोल्न र सुरापान गर्ने पनि छोड्नू ।

**नित्यं ब्राह्मणः अधःशय्याशायी पूर्व्वोत्थायी जघन्यसंवेशी वाग्बाहूदरसंयतः । नामगोत्रे गुरोः संमानतो निर्द्दिशेत् । अर्च्चिते श्रेयसि चैवम् ॥५॥**

ब्रह्मचारीले सधैं जमिनको ओछ्यानमा सुत्ने, गुरु उठ्नुभन्दा अघि नै उठ्ने तथा गुरुभन्दा पछि सुत्ने हुनू । बाणी-हात र पेटप्रति संयम राख्ने हुनु । गुरुको नाम र गोत्र सम्मानपूर्वक बोल्ने गर्नू । पूज्य र आफूभन्दा ठूलाका विषयमा पनि यसरी नै बोल्ने गर्नू ।

**शय्याासनस्थानानि विहाय प्रतिश्रवणमभिक्रमणं वचनाद् दृष्टेनाधःस्थानासनस्तिर्य्यग्वा तत्सेवायाम् ॥६॥**

गुरुले बोलाउँदा ओछ्यान, आसन वा आफ्नो स्थान छोडेर गुरुको नजिकै गई उनका कुरा सुन्नू । उनले देख्ने गरी होचो स्थान वा आसनमा बस्नू वा उभिएरै उनका सेवामा लाग्नू ।

**गुरुदर्शने चोत्तिष्ठेत् गच्छन्तमनुव्रजेत् कर्म विज्ञाप्याख्यायाहूताध्यायी युक्तः प्रियहितयोस्तद्भार्यापुत्रेषु चैवम् ॥७॥**

गुरुले देख्दा उठ्नू, उनि हिँड्दा उनका पछिपछि हिँड्नू । उनलाई आफ्नो कामका विषयमा सूचना दिनू । उनको आज्ञा लिएर उनले बोलाउँदा अध्ययन गर्नू । उनको खुशी र हीतमा लागिरहनू । उनकी पत्नी र पुत्रका विषयमा पनि यसै गर्नू ।

**नोच्छिष्टाशनस्नापनप्रसाधनपादप्रक्षालनोन्मर्दनोपसंग्रहणानि । विप्रोष्योपसंग्रहणं गुरुभार्याणां तत्पुत्रस्य च । नैके युवतीनां ॥८॥**

तर तिनको (गुरुका पत्नी र पुत्र) जूठो खाने, नुहाइदिने, श्रृङ्गार गरिदिने, गोडा धुने र मिच्ने वा छुने विधान छैन, यी काम नगर्नू । विदेशबाट फर्किएकी गुरुपत्नी र गुरुपुत्रको गोडा छुने विधान छ । कसैकसैले युवतीको गोडा कहिल्यै नछुनु पनि भन्दछन् ।

**व्यवहारप्राप्तेन सार्ववर्णिकं भैक्षाचरणमभिशस्तपतितवर्जम् । आदिमध्यान्तेषु भवच्छब्दः प्रयोज्यो वर्णानुपूर्वेण । आचार्यज्ञातिगुरुस्वेष्वलाभेऽन्यत्र । तेषां पूर्वं पूर्वं परिहरन्निवेद्य गुरवेऽनुज्ञातो भुञ्जीत । असन्निधौ तद्भार्यापुत्रसब्रह्मचारिसद्भ्यः । वाग्यतस्तृप्यन्नलोलुप्यमानः सन्निधायोदकं स्पृशेत् ॥९॥**

व्यवहार-शिक्षा पाएको ब्रह्मचारीले दुष्ट र पतितलाई छोडी सबै वर्णसँग भिक्षा माग्नू । भिक्षा माग्दा वर्णक्रम अनुसार शुरु, बीच र अन्तमा “भवत्” शब्दको प्रयोग गर्नु पर्दछ । अन्त भिक्षा नपाए आचार्य, आफ्ना नातागोता, गुरु तथा आफन्तबाट पनि लिनू । तर, यसमा पहिले पहिलेकालाई बार्नू । जे जति भिक्षा भेटिन्छ त्यो गुरुलाई अर्पित गरी उनका आज्ञाले भोजन गर्नू । उनी नभए गुरुपत्नी वा पुत्र वा वरिष्ठ ब्रह्मचारीलाई समर्पण गर्नू । चुपचाप नअघाएसम्म लोभ नगरी खानू र आचमन गर्नू ।

**शिष्यशिष्टिरवधेनाशक्तोरज्जुवेणुविदलाभ्यां तनुभ्यामन्येनघ्नन् राज्ञाः शास्यः ॥१०॥**

आचार्यले शिष्यलाई दण्ड नदिई शिक्षा दिनू । नसके मसिनो डोरी वा बाँसको हाँगाले शिष्यलाई हिर्काउने गर्नू । कुनै अरु वस्तुले शिष्यलाई पिटे राजाद्वारा उ दण्डनीय हुन्छ ।

**द्वादशवर्षाण्येकैकवेदे ब्रह्मचर्यं चरेत् प्रतिद्वादशवर्षेषु गह्णान्तं वा । विद्यान्ते गुरुरर्थेन निमन्त्र्यः । ततः कृतानुज्ञानस्य स्नानम् । आचार्यः श्रेष्ठो गुरुणां मातत्येके मातत्येके ॥११॥**

एक-एक वेद पढ्न बाह्र-बाह्र वर्ष लगाउनू र पूरै अवधिसम्म ब्रह्मचर्यको पालना गर्नू । अथवा जबसम्म सबै वेद ग्रहण हुँदैन तबसम्म ब्रह्मचर्यको पालना गर्दै पढिरहनू । विद्या आर्जन सकिएपछि गुरुलाई धन दिएर सम्मानित गर्नू । त्यसपछि गुरुको आज्ञालिएर नुहाए पछि उ "स्नातक" हुन्छ ।
आचार्य गुरुजनमध्येमा श्रेष्ठ हुन्छन् । कसैले माता श्रेष्ठ हुन्छिन् पनि भनेका छन् ।

॥ इति गौतमीये धर्मशास्त्रे द्वितीयोऽध्यायः ॥२॥
॥ गौतमीय शर्मशास्त्र, दोश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-७+११=१८
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १८



## ॥ अथ तृतीयोऽध्यायः ॥
## (तेश्रो अध्याय)
## । अथ ब्रह्मचारिप्रकरणवर्णनम् ।
## (ब्रह्मचारी प्रकरण)

**तस्याश्रमविकल्पमेके ब्रुवते ब्रह्मचारी गृहस्थोभिक्षुर्वैखानस इति तेषां गृहस्थो योनिरप्रजनत्वादितरेषाम् ॥१॥**

केही स्मृतिकारहरु स्नातक ब्रह्मचारीको आश्रमको विकल्प यस प्रकार बताउँदछन्-ब्रह्मचारी, गृहस्थ, सन्यासी र वानप्रस्थ । अरु आश्रममा प्रजननत्व नहुने हुँदा गृहस्थ नै तिनको उद्गम स्थान हो ।

**तत्रोक्तं ब्रह्मचारिण आचार्याधीनत्वमात्रं गुरोः कर्मशेषेण जपेत् गुर्वभावे तदपत्यवृत्तिस्तदभावे वृद्धे सब्रह्मचारिण्यग्नौ वा । एवं वृत्तो ब्रह्मलोकमवाप्नोति जितेन्द्रियः ॥२॥**

यी आश्रममध्ये ब्रह्मचारीका लागि आचार्यको अधिनमा रहनु मात्र भनिएको छ । गुरुको कामबाट बाँकी रहने समयमा मन्त्र आदिको जप गर्नू । गुरु नहुँदा उनका छोराको सेवामा लाग्नू । छोरा पनि नभए गुरुका कुनै वरिष्ठ शिष्यको सेवा गर्नू अथवा वेदाध्ययन गर्दाखेरी जुन अग्निको सेवा गर्दथ्यो त्यसैको सेवामा निमग्न हुनू । यस्तो व्यवहार गर्ने, इन्द्रिय संयमित भएको त्यो ब्रह्मचारीले (मृत्युपछि) ब्रह्मलोक पाउँदछ ।

**उत्तरेषाञ्चैतदविरोधी अनिचयो भिक्षुरूर्ध्वरेता ध्रुवशीलो वर्षासु भिक्षार्थी ग्राममियात् । जघन्यमनिवृत्तश्चरेत् । निवृत्ताशीर्वाक्चक्षुः कर्मसंयतः । कौपिनाच्छादनार्थं वासो बिभृयात् । प्रहीणमेकेऽनिर्णेजनाविप्रयुक्तम् । औषधिवनस्पतीनामङ्गमुपाददीत । न द्वितीयामुपहर्त्तूं रात्रिं ग्रामे वसेत् । मुण्डः शिखी वा वर्जयेज्जीववधम् । समो भूतेषु हिंसानुग्रहयोरनारतः ॥३॥**

अघिल्ला तीनमध्ये सन्यासी, कुनैको विरोध नगर्ने, धन आदि नबटुल्ने र आफ्नो शक्तिलाई उत्तम काममा लगाउने र वर्षाकालमा एकै ठाउँमा अचल रहने भई भिक्षाका लागि गाऊँमा जानू । कुनै रोकटोक बिना अन्तिम वर्णसँग पनि भिक्षा लिनू । इच्छा एवं धेरै बोलचाल तथा आँखा आदिका विषयबाट टाढै रहनू । कर्ममा संयमित हुनू । आफ्ना गोप्य स्थान ढाक्न लुगा लगाउनू । कसै कसैको यो वस्त्र नफाटिन्जेलसम्म नधुनू र परित्याग पनि नगर्नू भन्ने मत छ । (खानका लागि) अनाज र वृक्षका अङ्ग ग्रहण गर्नू । अर्को पटक भिक्षा लिन भनी रातमा गाऊँमा नबस्नू । कपाल पूरै खौरनू वा टुपी पाल्नू । जीव हिंसा नगर्नू । प्राणीमाथी समभाव राख्ने हुनू । कसै प्रति पनि हिंसा वा अनुग्रहमा आशक्ति राख्ने नहुनू ।

**वैखानसो वने मूलफलाशी तपःशीलः श्रावणकेनाग्निमाधायाग्राम्यभोजी देवपितृमनुष्यभूतर्षिपूजकः सर्व्वातिथिः प्रतिषिद्धवर्जं भैक्षमप्युपयुञ्जीत न फालकृष्टमधितिष्ठेत् ग्रामञ्च न प्रविशेज्जटिलश्चीराजिनवासा नातिशयं भुञ्जीत ॥४॥**

वैखानस (वैखानस सम्प्रदायको नभई कन पनि वानप्रस्थ आश्रम अँगालेको ब्रह्मचारी) वनमा कन्दमूल, फलफूल आदि खाने हुनू । तपस्वी स्वभावको हुनू । साउनमा अग्निको आधान गर्नू । गाऊँमा बनेको खानेकुरा नखानू । देव, पितृ, मानिस, प्राणी तथा ऋषिको पूजा गर्ने हुनू । निषेधितलाई छाडी अरु सबै उसका अतिथि बन्न सक्दछन् । (आपद्मा) भिक्षा पनि माग्न सक्दछ । हलोले जोतिएको ठाउँमा नबस्नू । गाऊँमा नछिर्नू । जटा पाल्नू । रुखको बोक्रा वा पशुको छालालाई कपडाको रुपमा लगाउनू । धेरै नखानू ।

**एकाश्रम्यं त्वाचार्याः प्रत्यक्षविधानाद् गार्हस्थस्य गर्हस्थस्य ॥५॥**

आचार्यहरु गृहस्थाश्रमको उपयोगिता प्रत्यक्ष हुने कारणले गर्दा यसलाई मुख्य आश्रम मान्दछन् ।

॥ इति गौतमीये धर्मशास्त्रे तृतीयोऽध्यायः ॥३॥
॥ गौतमीय शर्मशास्त्र, तेश्रो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-१८+५=२३
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : २३



## ॥ अथ चतुर्थोऽध्यायः ॥
## (चौथो अध्याय)
## । अथ विवाहप्रकरणवर्णनम् ।
## (विवाह प्रकरण)

**गृहस्थः सदृशीं भार्यां विन्देतानन्यपूर्वां यवीयसीम्
असमानप्रवरैर्विवाह ऊर्ध्वं सप्तमात् पितृबन्धुभ्यो बीजिनश्च
मातुर्बन्धुभ्यः पञ्चमात् ॥१॥**

गृहस्थले आफूजस्तै, अववाहिता, तरुनी, असमान प्रवरकी, पिताका सात र
माताको कुलका पाँच पुस्ता परकी कन्या विवाह गर्नू ।

**ब्राह्मो विद्याचारित्रबन्धुशीलसम्पन्नाय दद्यादाच्छाद्यालङ्कृतां
संयोगमन्त्रः प्राजापत्ये सह धर्मञ्चरतामिति आर्षे गोमिथुनं कन्यावते
दद्यादन्तर्वेद्यृत्विजे दानं दैवोऽलङ्कृत्येच्छन्त्या स्वयं संयोगो गान्धर्वो
वित्तेनानतिस्त्रीमतामासुरः प्रसह्यादानाद् राक्षसोऽसंविज्ञातोपसङ्गमात्
पैशाचः । चत्वारो धर्म्याः प्रथमाः षडित्येके ॥२॥**

यदि पिता वस्त्र र गहनाले सजाएर कन्यालाई विद्या-आचरण-चरित्र-नातागोता
र शीलले सम्पन्न वरलाई विवाह गरी दिन्छन् भने त्यो “ब्राह्म विवाह” हुन्छ ।
प्राजापत्य विवाहमा ‘तिमी दुई मिलेर धर्म अनुसार आचरण गर’ भनी कन्या
दिइन्छ । आर्ष विवाहमा वरले कन्याका पितालाई एउटा गाई र एउटा साँढे
दिनू । वेदिमा बसिरहेका ऋत्विजलाई जब कन्या सजाएर दिइन्छ त्यो “दैव
विवाह” हुन्छ । वरलाई चाहने कन्याको जब वरसँग आफैं मिलन हुन्छ त्यो
“गान्धर्व विवाह” हुन्छ । पत्नीहीन पुरुषलाई धन दिएर जो विवाह हुन्छ त्यो
“आसुर विवाह” हुन्छ । यदि बलजफ्ती कन्याको हरण गरिन्छ भने त्यो
“राक्षस विवाह” हुन्छ । यदि पुरुष अचेत कन्यालाई गमन गरी
त्यसलाई विवाह गर्दछ भने त्यो “पैशाच विवाह” हुन्छ । यीमध्ये पहिला चार
धर्मयुक्त हुन्छन् । कसैको मत पहिला छ वटा नै धर्मयुक्त हुन्छन् भन्ने पनि छ ।

**अनुलोमान्तरैकान्तरद्व्यन्तरासु जाताः
सवर्णाम्बष्ठोग्रनिषाददौष्मन्तपारशवाः ॥३॥**

ब्राह्मणबाट क्षत्रियामा उत्पन्न पुत्रलाई ‘सवर्ण’, क्षत्रियबाट वैश्यामा उत्पन्न पुत्रलाई ‘अम्बष्ठ’, वैश्यबाट शूद्रामा उत्पन्न पुत्रलाई ‘उग्र’, ब्राह्मणबाट वैश्यामा उत्पन्न पुत्रलाई ‘निषाद’, क्षत्रियबाट शूद्रामा उत्पन्न पुत्रलाई ‘दौष्मन्त’ र ब्राह्मणबाट शूद्रामा उत्पन्न पुत्रलाई ‘पारशव’ भनिन्छ ।

**प्रतिलोमास्तु सूतमागधायोगवक्षात्तृवैदेहकचाण्डालाः ॥४॥**

क्षत्रियबाट ब्राह्मणीमा उत्पन्न पुत्रलाई ‘सूत’, वैश्यबाट क्षत्रियामा उत्पन्न पुत्रलाई ‘मागध’, शुद्रबाट वैश्यामा उत्पन्न पुत्रलाई ‘आयोगव’, शूद्रबाट क्षत्रियामा उत्पन्न पुत्रलाई ‘क्षत्ता’, वैश्यबाट ब्राह्मणीमा उत्पन्न पुत्रलाई ‘वैदेहक’ र शूद्रबाट ब्राह्मणीमा उत्पन्न पुत्रलाई ‘चाण्डाल’ भनिन्छ ।

**ब्राह्मण्यजीजनत् पुत्रान् वर्णेभ्य आनुपूर्व्याद् ब्राह्मणसूतमागधचाण्डालान् तेभ्य एव क्षत्रिया मूर्धावसिक्तक्षत्रियधीवरपुक्कसान् तेभ्य एव वैश्या भृज्जकण्ठकमाहिष्यवैश्यवैदेहान् तेभ्य एव पारशवयवनकरणशूद्रान् शूद्रत्येके ॥५॥**

ब्राह्मणीले ब्राह्मण पतिबाट ‘ब्राह्मण’, क्षत्रिय पतिबाट ‘सूत’, वैश्य पतिबाट ‘मागध’ र शूद्र पतिबाट ‘चाण्डाल’ पुत्रलाई जन्म दिन्छे । त्यस्तै क्षेत्रिनीले ब्राह्मण पतिबाट ‘मूर्धाविसिक्त’, क्षत्रिय पतिबाट क्षत्रिय, वैश्य पतिबाट ‘धीवर’ र शूद्र पतिबाट ‘पुक्कस’ पुत्रलाई जन्म दिन्छे । त्यसरी नै वैश्याले ब्राह्मण पतिबाट ‘भृज्जकण्ठक’, क्षत्रिय पतिबाट ‘माहिष्य’, वैश्यबाट वैश्य र शूद्र पतिबाट ‘वैदेह’ पुत्रलाई जन्म दिन्छे । त्यस्तै शूद्राले ब्राह्मण पतिबाट ‘पारशव’, क्षत्रिय पतिबाट ‘यवन’, वैश्य पतिबाट ‘करण’ र शूद्र पतिबाट शूद्र पुत्रलाई जन्म दिन्छे भनेर पनि कसैकसैले भनेका छन् ।

**वर्णान्तरगमनमुत्कर्षापकर्षाभ्यां सप्तमेन पञ्चमेन चाचार्याः । सृष्ट्यन्तरजातानाञ्च प्रतिलोमास्तु धर्महीनाः शूद्रायाञ्च असमानायाञ्च**

**शूद्रात् पतितवृत्तिरन्त्यः पापिष्ठः पुनन्ति साधवः पुत्रास्त्रिपौरुषानार्षाद् दशैव प्राजापत्याद्दशपूर्वान् दशावरानात्मानञ्च ब्राह्मीपुत्राः ब्राह्मीपुत्राः ॥६॥**

आचार्यको यो मत छ की माथिल्लो वर्ण वा तल्लो वर्णमा विवाह गर्दा सात वा पाँच पुस्तासम्म अर्को वर्णमा जान्छ । अर्को वर्णकी स्त्रीबाट जन्मिएकाका बीचमा जुन् प्रतिलोम विवाह गरी त्यसबाट उत्पन्न हुन्छन् ती धर्मबाट हीन हुन्छन् । यसै गरी जो शूद्रामा उत्पन्न हुन्छन् वा शूद्रबाट असमान वर्णका स्त्रीमा उत्पन्न गराइन्छन् ती पतितवृत्ति, अन्त्य र पापिष्ठ हुन्छन् । दैव विवाहबाट जन्मने पुत्रले दश, आर्षबाट जन्मनेले तीन, प्राजापत्यबाट जन्मनेले पनि दश र ब्राह्म विवाहबाट जन्मने पुत्रले अघिल्ला दश र पछिल्ला दश पुस्ता र आफूलाई समेत पवित्र पार्दछ ।

॥ इति गौतमीये धर्मशास्त्रे चतुर्थोऽध्यायः ॥४॥
॥ गौतमीय शर्मशास्त्र, चौथो अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥

आदितः गद्यपद्यानां समष्टयङ्काः-२३+६=२९
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : २९

## ॥ अथ पञ्चमोऽध्यायः ॥
## (पाँचौं अध्याय)

### । अथ गृहस्थाश्रमवर्णनम् ।
### (गृहस्थाश्रम)

**ऋतावुपेयात् सर्वत्र वा प्रतिषिद्धवर्जम् ॥१॥**

ऋतुकालमा निषेधित तिथि छोडेर पत्नीका साथ समागम गर्नू ।

**देवपितृमनुष्यभूतर्षिपूजको नित्यस्वाध्यायः ॥२॥**

(ब्राह्मणले) देवता, पितृ, मानिस, भूत तथा ऋषिको पूजा गर्ने र नित्य स्वाध्याय गर्ने हुनू ।

**पितृभ्यश्चोदकदानं यथोत्साऽन्यद्भार्यादिरग्निर्दायादिर्वा । तस्मिन् गृह्याणि देवपितृमनुष्ययज्ञाः स्वाध्यायश्च । बलिकर्मग्नावग्निर्धन्वन्तरिर्विश्वे देवाः प्रजापतिः स्विष्टकृदिति होमः ॥३॥**

पितृलाई जल दिनू अनि उत्साहका साथ अन्य पत्नी, अग्नि, दाय आदिसँग सम्बन्धित कार्य गर्नू । यिनमा गृह्य कर्म हुन् : देवयज्ञ, पितृयज्ञ, अतिथियज्ञ र स्वाध्याय । बलिकर्म पनि गृह्यकर्म हो यसमा (अग्निमा) अग्नि, धन्वन्तरि, विश्वेदेवाः, प्रजापति र स्विष्टकृत्लाई आहुती दिइन्छ । त्यसैले यो पनि होम हो ।

**दिग्देवताभ्यश्च यथा स्वद्वारेषु मरुद्भ्यो गृहदेवताभ्यः प्रविश्य ब्रह्मणे मध्ये अद्भ्य उदकुम्भे आकाशायेत्यन्तरीक्षे नक्तञ्चरेभ्यश्च सायम् ॥४॥**

दिशाका देवतालाई ती ती दिशामा खुल्ने आफ्ना ढोकाहरुलाई, वायुलाई र गृह देवतालाई घरमा छिरेर, ब्रह्मलाई घरको बीचमा, जललाई जलको घडामा, आकाशलाई अन्तरिक्षमा र रातमा विचरण गर्ने जीवलाई साँझमा बलि दिनू ।

**स्वस्तिवाच्यभिक्षादानं प्रश्नपूर्वन्तु ददातिषु चैवं धर्म्येषु । समद्विगुणसाहस्रान्नत्यानि फलान्यब्राह्मणब्राह्मणश्रोत्रियवेदपारगेभ्यः ॥५॥**

स्वस्तिवाचन तथा भिक्षादान माग भएमात्र गर्नू । धर्मयुक्त दान पनि माग भएमात्र गर्नू । अब्राह्मण, ब्राह्मण, श्रोत्रिय र वेदमा पोख्तलाई दिँदा क्रमशः सामान्य, दोब्बर, हजार गुना र अनन्त फल प्राप्त हुन्छ ।

**गुर्वर्थनिवेशौषधार्थवृत्तिक्षीणयक्ष्यमाणाध्ययनाध्वसंयोगवैश्वजितेषु द्रव्यसंविभागो बहिर्वेदि भिक्षमाणेषु कृतान्नमितरेषु । प्रतिश्रुत्याप्यधर्मसंयुक्ताय न दद्यात् ॥६॥**

गुरु, विवाह र औषधिका लागि; वृत्तिहीन मानिस, यज्ञ गर्न चाहने, अध्येता, यात्रामा भेट हुने र विश्वजित् यज्ञ गर्नेलाई धन बाँड्नु पर्दछ । अरु माग्नेहरुलाई वेदीभन्दा बाहिर पाकेको अन्न दिनु पर्दछ । प्रतिज्ञा गरेर पनि अधर्मले युक्त मानिसलाई दिनु हुँदैन ।

**क्रुद्धहृष्टभीतार्त्तलुब्धबालस्थविरमूढमत्तोन्मत्त-वाक्यान्यनृतान्यपातकानि ॥७॥**

रिसाएको, खुशी भएको, डराएको, पीडित, लोभी, बालक, वृद्ध, मूर्ख र उन्मत्त मानिसको भूटो बोली पापको कोटीमा पर्दैन ।

**भोजयेत् पूर्वमतिथिकुमारव्याधितगर्भिणी-सुवासिनीस्थविराञ्जघन्यांश्च ॥८॥**

(गृहस्थीले आफू खानु अघि) अतिथि, कुमार, रोगी, गर्भवती स्त्री, भर्खरै विवाह भएकी स्त्री, वृद्ध र आफूभन्दा साना व्यक्तिलाई खुवाउनू ।

**आचार्यपितृसखीनान्तु निवेद्य वचनक्रिया ऋत्विगाचार्यश्वसुरपितृव्यमातुलानामुपस्थाने मधुपर्कः संवत्सरे पुनः पूजिता यज्ञविवाहयोः अर्वाक् राज्ञश्च श्रोत्रियस्य ॥९॥**

गर्नै पर्ने कार्य गर्दा आचार्य, पिता र मित्रको सल्लाहमा गर्नू । ऋत्विज, आचार्य, ससुरा, काका-ठूलोबा र मामा घरमा आउँदा वर्षको एकपटक मधुपर्क (अर्घ्य) दिनू । यज्ञ र विवाहमा ती फेरी मधुपर्कका लागि योग्य हुन्छन् । राजाभन्दा अघि श्रोत्रियको पूजा हुनु पर्दछ ।

**अश्रोत्रियस्यासनोदके श्रोत्रियस्य तु पाद्यमर्घ्यमन्नविशेषांश्चप्रकारयेन्नित्यं वा संस्कारविशिष्टं मध्यतोऽन्नदानमवैद्ये साधुवृत्ते विपरीते तु तृणोदकभूमिः स्वागतमन्ततः पूज्यानत्याशश्च शय्यासनावसथानुव्रज्योपासनानि सदृक्श्रेयसोः समानान्यल्पशोऽपि हीने असमानग्रामोऽतिथिरैकरात्रिकोऽधिवृक्षसूर्यो पस्थायी कुश्लानामयारोग्याणामनुप्रश्नोऽन्त्यं शूद्रस्य । ब्राह्मणस्यानतिथिरब्राह्मणो यज्ञे संवृतश्चेत् भोजनन्तु क्षत्रियस्योदूर्ध्वं ब्राह्मणेभ्योऽन्यान् भृत्यैः सहानृशंसार्थमानृशंसार्थम् ॥१०॥**

अश्रोत्रिय ब्राह्मणलाई आसन र (गोडा धुन) जल दिनू । श्रोत्रिय ब्राह्मणलाई गोडा धुन जल, अर्घ्य र अन्नविशेष दिनू वा सधैं राम्ररी बनेको अन्नबाट वैद्यबाहेकका राम्रो आचरणका मानिसलाई खान दिनू । विपरित आचरण हुनेलाई आसन, जल, र ठाउँ दिनू । कम्तिमा स्वागत चाहीं गर्नू । पूज्यभन्दा पहिले नखानू । शैया, आसन र ठाउँ दिएर तथा बिदा गर्दा पछिपछि (परसम्म) गई तिनको सेवा गर्नू । समान र श्रेष्ठलाई समान व्यवहार गर्नू । हीनलाई केही कम गर्नू । अर्को गाऊँको मानिस एक रातको अतिथि हुन सक्दछ । सूर्यको उपासना गर्नेले रुख मुनि रात बिताउनू । अतिथिलाई कुशल, आरोग्यता र क्षेम सोध्नू । शूद्रलाई पनि आरोग्य सोध्नू । ब्राह्मणको अब्राह्मण अतिथि हुँदैन । यदि नीच ब्राह्मण यज्ञमा  वरण गरिएको छ भने त उसले क्षत्रियभन्दा पछि खानू । ब्राह्मण बाहेकका व्यक्तिको आनृशंस ( कृपा) का लागि आफ्ना नोकरका साथ खाना खुवाउनू ।

॥ इति गौतमीये धर्मशास्त्रे पञ्चमोऽध्यायः ॥५॥

॥ गौतमीय शर्मशास्त्र, पाँचौं अध्यायको मोहन प्रसाद

सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-२९+१०=३९
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ३९



## ॥ अथ षष्ठोऽध्यायः ॥
## (छैटौं अध्याय)
## अथ गृहस्थाश्रमकर्तव्यवर्णनम् ।
## (गृहस्थाश्रमीका कर्तव्य)

**पादोपसंग्रहणं गुरुसमवायेऽन्वहम् ॥१॥**

गुरुजन भेट हुँदा प्रतिदिन तिनको चरणस्पर्श गर्नू ।

**अभिगम्य तु विप्रोष्य मातृपितृतद्बन्धूनां पूर्वजानां विद्यागुरूणां तत्तद्गुरूणाञ्च सन्निपाते परस्य ॥२॥**

परदेशबाट फर्किएपछि माता, पिता, आफ्ना बन्धुजन, दाजु, विद्या-गुरु र तिनका गुरुका गुरुको पनि चरणस्पर्श गर्नू । सँगै भेट भए ठूलाको पहिले चरणस्पर्श गर्नू ।

**नाम प्रोच्यायमहमित्यभिवादोऽज्ञसमवाये स्त्रीपुंयोगेऽभिवादतोऽनियममेके नाविप्रोष्य स्त्रीणाममातृपितृव्यभार्याभगिनीनां नोपसंग्रहणं भ्रातृभार्याणां श्वश्र्वाश्च ॥३॥**

आफ्नो नाम भन्दै "म फलानो हुँ" भनी अभिवादन गर्नू । मूर्ख जम्मा भएका ठाउँमा यसो नगर्नू । केही स्मृतिकारले पत्नी र पतिका बीचमा परस्पर अभिवादनको नियम छैन भनेका छन् । विदेशबाट फर्कनेभन्दा

बाहेकका समयमा पनि माता, काकी-ठूली आमा र दीदिहरुलाई बाहेक अरु नातेदार स्त्री, भाउजू र सासुको चरणस्पर्श नगर्नू ।

**ऋत्विक्श्वशुरपितृव्यमातुलानान्तु यवीयसां प्रत्युत्थानमनभिवाद्यास्तथान्यः पूर्वः पौरोऽशीतिकावरः शूद्रोऽप्यपत्यसमेनावरोऽप्यार्यः शूद्रेण नाम चास्य वर्जयेद्राज्ञश्चाजपः प्रेष्यो भो भवन्निति वयस्यः समानेऽहनि जातो दशवर्षवृद्धः पौरः पञ्चभिः कलाभरः श्रोत्रियश्चारणस्त्रिभिः राजन्यो वैश्यकर्मविद्याहीनो दीक्षितश्च प्राक्क्रयात् ॥४॥**

ऋत्विक्, ससुरा, काका वा ठूलोबा र मामा यदि ससाना छन् भने त ती आउँदा उठ्नू । ती अभिवादनका योग्य हुँदैनन् । यसैगरी आफ्नो शहरमा बास बस्ने अवस्थामा आफूभन्दा ठूलो मानिस पनि सम्मानमा उठ्न योग्य हुन्छन्, अभिवादनका योग्य हुँदैनन् । अस्सी वर्षभन्दा माथिका शूद्र पनि द्विजका लागि पुत्र समान हुन्छ तथा आर्य उमेरमा सानै भए पनि शूद्रका लागि पूजनीय हुन्छ । उसको नाम नकाट्नू । सेवकले राजाको पनि नाम नकाट्नू । एकैदिन जन्मने, दश वर्ष जेठो आफ्नै शहरको निवासी, पाँच वर्ष जेठो कलाकार-श्रोत्रिय-भाट तथा तीन वर्ष जेठो वैश्यकर्म गर्ने विद्याहीन क्षत्रिय दासका रुपमा किन्नुभन्दा अघि दीक्षितका लागि पनि “भो, भवान्” यसरी बोलाउन योग्य हुन्छन् ।

**वित्तबन्धुकर्मजातिविद्यावयांसि मान्यानि परबलीयांसि श्रुतन्तु सर्वेभ्योगरीयस्तन्मूलत्वाद्धर्मस्य श्रुतेश्च ॥५॥**

धन, नाता, कर्म, जाति, विद्या तथा उमेर-यी सबै मानका योग्य हुन्छन र क्रमशः पछिल्ला अधिक महत्वपूर्ण हुन् । वेद धर्मको मूल हुनाले गर्दा सबभन्दा ठूलो हुन्छ ।

**चक्रीदशमीस्थानुग्राह्यवधूस्नातकराजभ्यः पथो दानं राज्ञा तु श्रोत्रियाय श्रोत्रियाय ॥६॥**

रथवाला (चक्र चलाएर जीविका गर्ने), सय वर्ष हाराहारीको मानिस, दयाका पात्र, बुहारी, स्नातक तथा राजालाई बाटो दिनू, राजाले पनि श्रोत्रियका लागि अवश्य बाटो छाडिदिनू ।

॥ इति गौतमीये धर्मशास्त्रे षष्ठोऽध्यायः ॥६॥
॥ गौतमीय शर्मशास्त्र, छैटौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-३९+६=४५
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ४५



## ॥ अथ सप्तमोऽध्यायः ॥
## अथापद्धर्मवर्णनम् ।

**आपत्कल्पो ब्राह्मणस्याब्राह्मणाद्विद्योपयोगोऽनुगमनं शुश्रूषा समाप्तेर्ब्राह्मणोगुरुर्याजनाध्यापनप्रतिग्रहाः सर्वेषां पूर्वः पूर्वो गुरुस्तदलाभे क्षात्रवृत्तिस्तदलाभे वैश्यवृत्तिः ॥१॥**

आपद्मा ब्राह्मणले अब्राह्मणबाट विद्या सिक्न सक्दछ । त्यस्ता गुरुको पनि अनुगमन र सेवा गर्नू । आपत्काल समाप्ति पछि भने ब्राह्मण नै गुरु हुन्छ । यज्ञ गराउनु, पढाउनु र दान लिनु : यी ब्राह्मणका मुख्य कर्तव्य हुन् । यिनमा पनि पछिल्ला भन्दा अघिल्ला ठूला हुन्छन् । यदि ब्राह्मणले स्व-वृत्ति नपाए, क्षात्रीय-वृत्ति लिनू र नपुगे वैश्य-वृत्ति लिनू ।

**तस्यापण्यं गन्धरसकृतान्नतिलशाणक्षौमाजिनानि रक्तनिर्णिक्ते वाससी  क्षीरञ्च सविकारं मूलफलपुष्पौषधमधुमांसतृणोदकापथ्यानि पश्वश्च हिंसासंयोगे पुरुषवशाकुमारीवेहतश्च नित्यं भूमिव्रीहियवाजाव्यश्च ऋषभधेन्वनडुहश्चैके ॥२॥**

वैश्यवृत्ति लिए गन्ध, रस, पकाइएका खाना, तिल, सन र आलसले वनेका वस्तु, छाला, रङ्गाइएका र धोइएका कपडा, दूध र दूधका परिकार, कन्दमूल, फलफूल, फूल, औषधी, मह, मासु, घाँस, पानी, पच्न कठिन पदार्थ, मार्नका लागि पशु, दास, बन्ध्या स्त्री, कुमारी, गर्भ तुहिने गाई, जमिन, चामल, जौ, बोका र भेडा कहिल्यै नबेच्नू । कसैले (कुनै स्मृतिकारले) साँढे, गाई र बहर पनि नबेच्नु भनेका छन् ।

**विनिमयस्तु रसानां रसैः पशूनाञ्च न लवणकृतान्नयोस्तिलानाञ्च समेनामेन तु पक्वस्य संप्रत्यर्थे सर्वथा वृत्तिरशक्तावशौद्रेण तदप्येके प्राणसंशये तद्वर्णसङ्करोऽभक्ष्यनियमस्तु प्राणसंशये ब्राह्मणोऽपि शस्त्रमाददीत राजन्यो वैश्यकर्म वैश्यकर्म ॥३॥**

रसको रसैसँग तथा पशुको विनिमय पशुकै साथ हुन सक्दछ । नुन, पाकेको खाना र तिल अरु वस्तुसँग विनिमय हुन सक्दैन । तत्कालको प्रयोजनको लागि पाकेकोसँग काँचो साट्न सकिन्छ । नसक्दा सबै वर्ण शूद्र वृत्ति बाहेकका सबै वृत्ति अपनाई बाँच्न सक्दछन् । कसैको (कुनै कुनै स्मृतिकारको) मतमा प्राणै सङ्कटमा पर्दा शूद्र वृत्ति पनि गर्न सकिन्छ । यो वर्णसङ्कर हो ता पनि यसमा पनि खान नहुने कुराको नियम भने पालना गर्नुपर्दछ । ज्यान जाने अवस्था आए ब्राह्मणले पनि हतियार उठाउन सक्दछ भने क्षत्रियले पनि वैश्यकर्म गर्न सक्दछ ।

॥ इति गौतमीये धर्मशास्त्रे सप्तमोऽध्यायः ॥७॥
॥ गौतमीय शर्मशास्त्र, सातौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-४५+३=४८
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ४८



## ॥ अथाष्टमोऽध्यायः ॥
## (आठौं अध्याय)

### । अथ संस्कार वर्णनम् ।
### (संस्कार)

**द्वौ लोके धृतव्रतौ राजा ब्राह्मणश्च वहुश्रुतस्तयोश्चतुर्विधस्य मनुष्यजातस्यान्तः संज्ञानाश्चलनपतनसर्पणानामायत्तं जीवनं प्रसूतिरक्षणमसङ्करोधर्मः ॥१॥**

लोकमा दुई खालका व्रत नै धारण गरिएका हुन्छन् -राजा र बहुश्रुत ब्राह्मण । चारै वर्णका मानिस, भित्री चेतनायुक्त, हिँड्ने, उड्ने र घस्रनेको जीवन यिनै दुई व्रतका अधिनमा हुन्छन् । रक्त पवित्रताको रक्षा नै सङ्करहीन धर्म हो ।

**स एव बहुश्रुतो भवति लोकवेदवेदाङ्गविद्वाकोवाक्येतिहासपुराणकुशलस्तदपेक्षास्तद्वृत्ति-श्चत्वारिंशता संस्कारैः संस्कृतस्त्रिषु कर्मस्वभिरतः षट्सु वासामयाचारिकेष्वभिविनीतः षड्भिः परिहार्यो राज्ञावध्यश्चाबन्ध्यश्चादण्डयश्चाबहिष्कार्य-श्चापरिवाद्यश्चापरिहार्यश्चेति ॥२॥**

त्यही बहुश्रुत हो जो लोकाचार-वेद र वेदाङ्गलाई जान्दछ, वाकोवाक्य (वेदको एक अंश) इतिहास र पुराणमा कुशल भई त्यो चाहन्छ र सो अनुसार आचरण गर्ने खालको छ, चालीस संस्कारले सुसंस्कृत छ, तीन कर्म (अध्ययन, यज्ञ र दान) मा लागि परेको छ वा छ कर्म (दान दिने र लिने, पढ्ने र पढाउने अनि होम गर्ने र गराउने) मा लागिरहन्छ, स्मार्त कर्ममा सुशिक्षित छ, छ कुरा ( काम, क्रोध, लोभ, मोह, अहङ्कार र मात्सर्य ) बाट रहित छ । यस्तो भए उ राजाबाट न वधगर्न न त बाँध्नको लागि नै योग्य हुन्छ । न दण्डनीय हुन्छ, न बहिष्कार गर्न योग्य हुन्छ, न निन्दनीय हुन्छ न त त्याग कै योग्य हुन्छ ।

**गर्भाधानपुंसवनसीमन्तोन्नयनजातकर्म-नामकरणान्नप्राशनचौडोपनय नं चत्वारि वेदव्रतानि स्नानं सहधर्मचारिणी संयोगः पञ्चानां यज्ञानामनुष्ठानं देवपितृमनुष्यभूतब्रह्मणामेतेषाञ्चाष्टकापार्वणश्राद्धश्रावण्याग्रहायणीचैत्राश्वयुजीति सप्त पाकयज्ञसंस्था अग्न्याधेयमग्निहोत्रं दर्शपौर्णमासावाग्रयणं चातुर्मास्यं निरूढपशुबन्धः सौत्रामणीति सप्त हविर्यज्ञस्तथा अग्निष्टोमोक्त्यग्निष्टोम उक्थ्यः षोडशी वाजपेयोक्ति रात्रोऽप्तोर्याम इति सप्त सोमसंस्था इत्येते चत्वारिंशत्संस्काराः ॥३॥**

गर्भाधान, पुंसवन, सीमन्तोन्नयन, जातकर्म, नामकरण, अन्नप्राशन, चूडाकरण, उपनयन, चार वेदका चार व्रत, विद्या-स्नान, विवाह, देव-पितृ-मनुष्य-भूत र ब्रह्म यज्ञको अनुष्ठान, अष्टका-औंसी र पूर्णिमामा गरिने पार्वणश्राद्ध-श्राद्ध-श्रावणी-आग्रहायणी-चैत्रा र आश्वयुजी यी सात पाकयज्ञ, अग्न्याध्येय-अग्निहोत्र-दर्शपौर्णमास-आग्रयण-चातुर्मास्य-निरुढपशुबन्ध र सौत्रामणि यी सात हविर्यज्ञ तथा अग्निष्टोम-अत्यग्निष्टोम-उक्थ्य-षोडशी-वाजपेय-अतिरात्र र अप्तोर्याम यी सात प्रकारका सोमयज्ञ : यी सबै मिलाएर चालीस संस्कार हुन्छन् ।

**अथाष्टावात्मगुणा दया सर्वभूतेषु क्षान्तिरनसूया शौचमनायासो मङ्गलमकार्पण्यमस्पृहेति यस्यैते न चत्वारिंशत् संस्कारा नचाष्टावात्मगुणा न स ब्रह्मणः सायुज्यं सालोक्यं च गच्छति । यस्य तु खलु संस्काराणामेकदेशोऽप्यष्टावात्मगुणा अथ स ब्रह्मणः सायुज्यं सालोक्यञ्च गच्छति गच्छति ॥४॥**

अब आठ आत्मगुण भन्छु-सबै प्राणिमाथि दया, क्षमा, द्वेषहीनता, शौच, शारीरिक तथा मानसिक श्रान्तिको हानी, सर्वहित, कञ्जुसताको अभाव र तृष्णाको ह्रास । जसको न चालीस संस्कार गरिएको छ न यी आठ गुण प्राप्त छ उसलाई ब्रह्मको सायुज्य र सालोक्य प्राप्त हुन सक्दैन । त्यस्तै जसका यी

चालीसमध्ये केही संस्कार मात्र गरिएको छ र यी आठ आत्मगुण छन् भने त उ अवश्य नै ब्रह्मको सायुज्य र सालोक्यमा प्राप्त हुन्छ हुन्छ ।

॥ इति गौतमीये धर्मशास्त्रे अष्टमोऽध्यायः ॥८॥
॥ गौतमीय शर्मशास्त्र, आठौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-४८+४=५२
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ५२



## ॥ अथ नवमोऽध्यायः ॥
## (नवौँ अध्याय)

### । अथ कर्तव्याकर्तव्यवर्णनम् ।
### (कर्तव्य र अकर्तव्य)

स विधिपूर्वं स्नात्वा भार्यामधिगम्य यथोक्तान् गृहस्थधर्मान् प्रयुञ्जान इमानि व्रतान्यनुकर्षेत् स्नातको नित्यं शुचिः सुगन्धिः स्नानशीलः सति विभवे न जीर्णमलवद्वासाः स्यान्न रक्तमुल्बणमन्यधृतं वा वासो बिभृयान्न स्रगुपानहौ निर्णिक्तमशक्तौ न रूढश्मश्रुरकस्मान्नाग्निमपश्च युगपद्धारयेन्नाञ्जलिना पिबेन्न तिष्ठन्नुद्धृतोदकेनाचामेन्न आचामेन्न शूद्राशुच्येकपाण्यावर्जितेन न वाय्वग्निविप्रादित्यापो देवता गाश्च प्रतिपश्यन् वा मूत्रपुरीषामेध्यान्व्युदस्येन्नैव देवताः प्रति पादौ प्रसारयेन्न पर्णलोष्टाश्मभिर्मूत्रपुरीषापकर्षणं कुर्यान्न भस्मकेशतुषकपालान्यधितिष्ठेन्न म्लेच्छाशुच्यधार्मिकैः सह सम्भाषेत सम्भाष्य पुण्यकृतो मनसा ध्यायेद् ब्राह्मणेन वा सह सम्भाषेत ॥१॥

उसले (गृहस्थाश्रममा प्रवेश गर्ने ब्रह्मचारीले) विधिपूर्वक नुहाई पत्नी विवाह गरी बताइएका गृहस्थ धर्मको आचरण गर्दै यी व्रतहरुको पालना गर्नू :-स्नातक सधैं शुद्ध रहनू । सुगन्धी हुनू । सधैं नुहाउने हुनू । पैसा हुँदाहुँदै च्यातिएका र पुराना लुगा लाउने नहुनू । रङ्गाइएका, बहुमूल्य र अरुले लगाएका लुगा नलगाउनू । (अरुले लगाएका) मालाजुत्ता नलगाउनू । नसके यी वस्तु धोएर लगाउनू । कुनै कारण नपरी दाह्री जुँगा नपाल्नू । आगो र पानी एकसाथ नबोक्नू । अँजुलीले पानी नपिउनू । उभाएको पानीले उभिईउभिई आचमन नगर्नू । शूद्र, अपवित्र व्यक्तिले दिएको र एक हातले निकालेको पानीले पनि आचमन नगर्नू । वायु, अग्नि, ब्राह्मण, सूर्य, जल, देवता र गाईतिर हेरी मल, मूत्र र अपवित्र वस्तुको विसर्जन नगर्नू । देवतातिर गोडा नपसार्नू । पात, माटाको डल्लो र ढुङ्गाले मलमूत्र नसोर्नू । खरानी, कपाल, भुस र खोपडीमाथि नउभिनू । म्लेच्छ, अपवित्र र अधार्मिक व्यक्तिसँग कुराकानी नगर्नू । गर्नै परे पुण्यवान् व्यक्तिलाई मनमा सम्झिनू वा ब्राह्मण साथ लिई कुराकानी गर्नू ।

**अधेनुंधेनुभव्येति ब्रूयादभद्रं भद्रमिति कपालं भगालमिति मणिधनुरितीन्द्रधनुः ॥२॥**

गाई नहुनेलाई गाई पाल्ने भन्नू । अभद्रलाई भद्र भन्नू । कपाललाई भगाल भन्नू । इन्द्रधनुलाई मणिधनु भन्नू ।

**गां धयन्तीं परस्मै नाचक्षीत न चैनां वारयेन्न मिथुनीभूत्वा शौचं प्रति विलम्बेत न च तस्मिन् शयने स्वाध्यायमधीयीत द न चापररात्रमधीत्य पुनः प्रतिसंविशेन्नाकल्यां नारीमभिरमयेन्न रजस्वलां न चैनां श्लिष्येन्न कन्यामग्निमुखोपधमन विगृह्यवादबहिर्गन्धमाल्यधारणपापीयसावलेखनभार्यया सह भोजनाञ्जन्त्यवेक्षणकुद्वारप्रवेशनपादधावनासन्दस्थभोजननदी- बाहुतरण वृक्षविषमारोहणावरोहणप्राणव्यवस्थानानि च वर्जयेत् ॥३॥**

चरिरहेको गाईको कुरा अरुलाई नभन्नू र नधपाउनू । सम्भोग पछि शौच गर्न ढिला नगर्नू । सम्भोग पछि त्यही ओछ्यानमा बसेर स्वाध्याय नगर्नू । रातको अन्तिम प्रहरमा वेद पढी फेरी ओछ्यानमा नसुत्नू । रोगी स्त्रीलाई सम्भोग नगर्नू । रजस्वलालाई सम्भोग नगर्नू । न यिनलाई अङ्कमाल गर्नु न त कन्यालाई नै । आगोलाई मुखले फुक्न, झगडा निम्त्याउने खालका गालीगलौच गर्न, चन्दन-माला आदि लगाई बाहिर घुमफिर गर्न, धेरै पापीलाई हेर्न, पत्नीका साथ खाना खान, श्रृङ्गार गरिरहेकी स्त्रीलाई हेर्न, कुद्वारबाट प्रवेश गर्न, अरुबाट आफ्नो गोडा धुवाउन, आसनमा राखेको खाना खान, हात चलाएर नदी तर्न, रुख तथा अग्लाहोचा स्थानमा चढ्ने र ओर्लने गर्न तथा ज्यान जोखिममा पार्न हुँदैन ।

**न सन्दिग्धां नावामधिरोहेत् सर्वत एवात्मानं गोपायेन्न न प्रावृत्य शिरोऽहनि पर्यटेत् प्रावृत्य तु रात्रौ मूत्रोच्चारे न भूमावनन्तर्धाय नाराच्चावसथान्न स्मकरीषकृष्टच्छायापथिकाम्येषु उभे मूत्रपुरीषे दिवा कुर्यादुदङ्मुखः सन्ध्ययोश्च रात्रौ तु दक्षिणामुखः पालाशमासनं पादुके दन्तधावनमिति वर्जयेत् ।**
**सोपानत्कश्चाशनासनशयनाभिवाद-न्नमस्कारान् वर्जयेत् ॥४॥**

शङ्कास्पद डुङ्गामा नचढ्नू । सबैतिरबाट आफ्नो रक्षा गर्नू । दिनमा टाउको छोपेर नहिँड्नू, रातमा टाउको छोपेरै घुम्नू । मलमूत्र त्यागे पछि जमिनलाई नछोपी नछोड्नू । मलमूत्र आवासको नजिक नगर्नू । खरानी-सुकेको गोबर-जोतेको खेत-छाया-बाटो तथा कमलो वस्तुमा मलमूत्र त्याग नगर्नू । मल र मूत्र दुवैको त्याग गर्दा दिनमा र दुवै सन्ध्यामा उत्तरतिर तथा रातमा दक्षिणतिर फर्केर त्याग गर्नू । पलाँशको आसन, पादुका र दतिवन वर्जित छ । जुता लगाएर खान, बस्न, सुत्न, अभिवादन गर्न र नमस्कार गर्न बर्जित छ ।

**न पूर्वाह्णमध्यन्दिनापराह्णानफलान् कुर्याद्यथाशक्ति धर्मार्थकामेभ्यस्तेषु च धर्मोत्तरः स्यान्न नग्नां परयोषितमीक्षेत न पदासनमाकर्षेन्न शिश्नोदरपाणिपादवाक्चक्षुश्चापलानि**

**कुर्याच्छेदनभेदनविलेखनविमर्दनावस्फोटनानि नाकस्मात् कुर्यान्नोपरिवत्सतन्तीं गच्छेन्न जलक्रीडः स्यान्न यज्ञमवृतोगच्छेद्दर्शनाय तु कामम्॥५॥**

पूर्वाह्ण, मध्याह्न र अपराह्णको समय खेर नफाल्नू । धर्म-अर्थ र कामका लागि यसको यथाशक्ति उपयोग गर्नू । यी सर्बमध्ये धर्मलाई उत्तम मान्नू । पराया नाङ्गी स्त्रीलाई नहेर्नू । गोडाले आसन नतान्नू । लिङ्ग, पेट, हात, गोडा, आँखा र वचनको चञ्चलता नगर्नू । अनाहकमा छेदन, भेदन, कन्याउने, मिच्ने र अङ्ग पड्काउने आदि काम नगर्नू । बाच्छा आदि बाँधिएका डोरी नाघेर नजानू । जलमा क्रिडा नगर्नू । बिना वरण यज्ञमा नजानू तर हेर्नका लागि जान सक्दछ ।

**न भक्ष्यानुत्सङ्गे भक्षयेन्न रात्रौप्रेष्याहृतमुधृतस्नेहविलपनपिण्याकमथितप्रभृतीनि चात्तवियाणि नाश्नीयात् सायं प्रातस्त्वन्नमभिपूजितमनिन्दन् भुञ्जीत न कदाचिद्रात्रौ नग्नः स्वपेत् स्नायाद्वा यच्चात्मवन्तो वृद्धाः सम्यग्विनीता दम्भलोभमोहवियुक्ता वेदविद आचक्षते तत्समाचरेत्॥६॥**

खाने कुरा काखमा राखी नखानू । रातमा दासले लेराएको तथा चिल्लोपना निकालिएका बिलाउनी, पिना, आदिजस्ता मथेर निकालिएका वस्तु नखानू ।बिहानबेलुकी पूजित अन्नलाई निन्दा नगरी खानू । रातमा कहिल्यै नाङ्गै नसुत्नू र ननुहाउनू पनि । आत्मवान्, सुशिक्षित, दम्भ-लोभ र मोह रहित, वेदविद ठूला मान्छेले जे भन्छन् त्यसै अनुसार आचरण गर्नू ।

**योगक्षेमार्थमीश्वरमधिगच्छेन्नान्यमन्यत्र देवगुरुधार्मिकेभ्यः प्रभूतैधोदकयवसकुशमाल्योपनिष्क्रमणमार्य्यजभूयिष्ठमनलसमृद्धं धार्मिकाधिष्ठितं निकेतनमावसितुं यतेत प्रशस्तमङ्गल्यदेवतायतनचतुष्पथादीन् प्रदक्षिणमावर्तेत । मनसा वा तत्समग्रमाचारमनुपालयेदापत्कल्पः ॥७॥**

योगक्षेमका लागि ऐश्वर्यवानका शरणमा जानु तर देवता, गुरु र धार्मिक व्यक्ति छोडी अरुको होइन । प्रशस्त इन्धन, जल, भुस, कुश, फूल, बाहिरभित्र गर्ने ढोका, श्रेष्ठजनको बाहुल्यता, यज्ञमा समृद्ध, र धार्मिकजनले अधिष्ठित घरमा आवासका लागि प्रयास गर्नू । हिँड्दा सजिलो तथा माङ्गलिक स्थान, देवालय र चौबाटो आदिलाई दाहिने पारेर हिँड्नू । विपत्तिमा परेको अवस्थामा पनि यी सबै आचारलाई मनैले पालना गर्नू ।

**सत्यधर्मा आर्यवृत्तः शिष्टाध्यापकशौचशिष्टः श्रुतिनिरतः स्यान्नित्यमहिंस्रो मृदुर्दृढकारी दमदानशील एवमाचारो मातापितरौ पूर्वापरान् सम्बन्धान् दुरितेभ्यो मोक्षयिष्यन् स्नातकः शश्वद्ब्रह्मलोकान्न च्यवते न च्यवते ॥८॥**

सत्य धर्मशिल, श्रेष्ठ आचारको त्यो शिष्य अध्यापकहरुबाट शौचको शिक्षा दिइएको छँदो वेदमा आशक्त हुनू । नित्य अहिंसक भई कोमल स्वभावको तर दृढतापूर्वक कार्य गर्ने, इन्द्रिय वशमा पार्ने, दानशील भएको यस्तो आचरणको त्यो स्नातक आफ्ना मातापिता तथा आफ्ना अघिपछिका पुस्ताको खराबीलाई मुक्त पार्न चाहँदै शास्वत ब्रह्मबाट कहिल्यै च्यूत हुँदैन ।

॥ इति गौतमीये धर्मशास्त्रे नवमोऽध्यायः ॥९॥
॥ गौतमीय शर्मशास्त्र, नवौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-५२+८=६०
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ६०



## ॥ अथ दशमोऽध्यायः ॥
## (दशौं अध्याय)

## । अथ वर्णानां वृत्तिवर्णनम् ।
## (चार वर्णका वर्णअनुसारका पेसा)

**द्विजातीनामध्ययनमिज्या दानं ब्राह्मणस्याधिकाः प्रवचनयाजनप्रतिग्रहाः पूर्वेषु नियमस्त्वाचार्यज्ञातिप्रियगुरुधनविद्याविनिमयेषु ब्रह्मणः सम्प्रदानमन्यत्र यथोक्तात् कृषिवाणिज्ये चास्वयंकृते कुसीदञ्च ॥१॥**

वेद अध्ययन, यजन र दान यी द्विजका धर्म हुन् । अध्यापन, यज्ञ गराउनु र दान लिनु यी ब्राह्मणका अधिक धर्म हुन् । पहिला (तीन) धर्म हुँदाहुँदै यी पेसाका लागि हुन् । आचार्य, नातेदार, प्रियजन, गुरुजन आदिद्वारा धन तथा विद्या साटेर वेद प्रदान गरिन्छ । यस बाहेक ब्राह्मणले खेती र व्यापार पनि गर्न सक्दछ । खेती र व्यापार आफू स्वयंले नगरे ब्याज लिने काम पनि गर्न सक्छ ।

**राज्ञोधिकं रक्षणं सर्वभूतानां न्याय्यदण्डत्वं बिभृयाद् ब्राह्मणान् श्रोत्रियान् निरुत्साहांश्चाब्राह्मणानकरांश्चोपकुर्वाणांश्च योगश्च विजयेऽभये विशेषेण चर्या च रथधनुर्भ्यां संग्रामे संस्थानमनिवृत्तिश्च न दोषो हिंसायामाहवेऽन्यत्रव्यश्वसारथ्यायुधकृताञ्जलिप्रकीर्णकेशपराङ्मुखो पविष्ट स्थलवृक्षाधिरूढदूतगोब्राह्मणवादिभ्यः ॥२॥**

सबै प्राणीको रक्षा तथा न्यायपूर्वकको दण्ड राजाका अधिक धर्म हुन् । ब्राह्मण, श्रोत्रिय, उत्साहहीन, अब्राह्मण, कर नदिनेहरु, ब्रह्मचर्य समाप्त गरी गृहस्थमा प्रवेश गर्नेहरुको भरणपोषण गर्नू । उ शत्रुलाई जित्न लागिरहनू तथा विशेषगरी डरका बेला उसको काम यो हो की रथमाथि चढेर धनुष हातमा लिई युद्धमा अडिरहनू, पछाडी नफर्कनू । घोडा, सारथी र हतियारले हीन, हाथ जोडिरहेको, कपाल खुलेको, नतमस्तक भएको, जमिनमा बसेको, अग्लो स्थान वा रुखमाथि चढेको तथा आफूलाई दूत, गाई वा ब्राह्मण बताउने मानिसलाई छाडी अरुको युद्धमा हिँसा गर्नु दोष हुँदैन ।

**क्षत्रियश्चेदन्यस्तमुपजीवेत्तद्वृत्तिः स्यात् जेता लभेत सांग्रामिकं वित्तं वाहनन्तु राज्ञ उद्धारश्चापृथग्जयेन्यत्तु यथार्हं भाजयेद्राजा ॥३॥**

यदि अरु कुनै अर्को धेरै बलियो क्षत्रिय उसको सेवामा छ भने त उसैबाट आफ्नो आजीविका प्राप्त गर्नू । यदि युद्धमा उसले जित्दछ भने उ उसबाट पाउने धनको अधिकारी हुन्छ । वाहन राजाका हुन् । यदि विजय मिली पाइएको हो भने लुटेको धनको छैटौं भाग राजालाई जान्छ । बाँकी भाग राजाले यथायोग्य बाँड्नू ।

**राज्ञे बलिदानं कर्षकैर्दशममष्टमं षष्ठं वा पशुहिरण्ययोरप्येके पञ्चाशद्भागं विंशतिभागः शुल्कः पण्ये मूलफलपुष्पौषधमधुमांसतृणेन्धनानां षष्ठं तद्रक्षणधर्मित्वात्तेषु तु नित्ययुक्तः स्यादधिकेन वृत्तिः शिल्पिनो मासि मास्येकैकं कर्म कुर्युरेतेनात्मोपजीविनो व्याख्याता नौचक्रीवन्तश्च भक्तं तेभ्यो दद्यात् पण्यं वणिग्भिरर्थापचयेन देयम् ॥४॥**

राजालाई किसानले आफ्नो उब्जनीको दशौं, आठौं वा छैटौं भाग मालपोत कर दिनू । केही स्मृतिकारका अनुसार पशु तथा सुनको पनि पचासौं भाग बलिको रुपमा दिइनु पर्दछ । बजारमा बिक्री हुने सामानमा बिसौं भाग शुल्क हुन्छ । कन्दमूल, फलफूल, फूल, औषधी, मह, मासु, घाँस तथा इन्धनको छैटौं भाग शुल्कका रुपमा दिइनु पर्दछ किनकी उनको (तिनको) रक्षा गर्नु राजाको कर्तव्य हो । ऊ आफ्ना ती कर्तव्य पालनमा सैं जुटिरहनू । राजाले बढी पाएकोबाट आफ्नो जीविका चलाउनू । शिल्पकारले प्रत्येक महिना एक-एक दिन राजाका लागि काम गर्नू । यसैबाट श्रमिक, नाविक तथा रथकारको पनि व्याख्या भयो । राजाले यिनलाई जब ती काममा आउँदछन् खाना खुवाउनू । व्यापारीले राजालाई कम मूल्यमा सामान दिनू ।

**प्रनष्टमस्वामिकमधिगम्य राज्ञे प्रब्रूयुर्विख्याप्य संवत्सरं राज्ञा रक्ष्यमूर्ध्वमधिगन्तुश्चतुर्थं राज्ञः शेषः स्वामी**

**रिक्थक्रयसंविभागपरिग्रहाधिगमेषु ब्राह्मणस्याधिकं लब्धं क्षत्रियस्य विजितं निर्विष्टं वैश्यशूद्रयोर्निध्यधिगमो राजधनं न ब्राह्मणस्याभिरूपस्याब्राह्मणो व्याख्यातः षष्ठं लभेतेत्येके चौरहृतमपजित्य यथास्थानं गमयेत् कोशाद्वा दद्यादक्ष्यं बालधनमाव्यवहारप्रापणात् समावृत्तेर्वा ॥५॥**

वेवारिश वस्तु भेटिए राजालाई बताउनु जनताको कर्तव्य हुन्छ । राजाले पनि सूचना दिई एक वर्षसम्म त्यो वस्तु आफूसँग राख्नू । त्यसपछि पनि मालिक नभेटिए एक चौथाई भेट्टाउनेलाई र बाँकी राजालाई हुन्छ । पैतृक सम्पत्तिबाट किनिएका वस्तु, अंशबण्डा र दानबाट प्राप्त वस्तुका हरेक व्यक्ति आफैं मालिक हुन्छन् । ब्राह्मणको उपलब्ध धन र क्षत्रियको जितेको धन तथा वैश्य र शूद्रका परिश्रमबाट पाउने धन अतिरिक्त धन हुन्छ । खजाना भेटिए त्यो राजाको हुन्छ । यदि त्यो विद्वान ब्राह्मणले भेटाए राजाले नलिनू । यसैबाट अब्राह्मणको व्याख्या भयो । कसैकसैले यस्तो ब्राह्मणलाई त्यो खजानाको छैटौं भाग मिलोस् पनि भन्दछन् । राजाले बालकको धनलाई ऊ व्यावहारिक (बालिग) नभएसम्म वा उसको समावर्तन संस्कार नभएसम्म रक्षा गर्नू ।

**वैश्यस्याधिकं कृषिवणिक्पाशुपाल्यकुसीदम् ॥६॥**

कृषि, व्यापार, पशुपालन र ब्याज वैश्यका अरु जातिका भन्दा बढी धन हुन् ।

**शूद्रश्चतुर्थो वर्ण एकजातिस्तस्यापि सत्यमक्रोधः शौचमाचमनार्थे पाणिपादप्रक्षालनमेवैके श्राद्धकर्म भृत्यभरणं स्वदारवृत्तिः परिचर्या चोत्तरेषां तेभ्यो वृत्तिं लिप्सेत जीर्णान्युपानच्छत्रवासः कूर्चान्युच्छिष्टाशनं शिल्पवृत्तिश्च यञ्चायमाश्रितो भर्त्तव्यस्तेन क्षीणोऽपि तेन चोत्तरस्तदर्थोस्य निचयः स्यादनुज्ञातोऽस्य नमस्कारो मन्त्रः पाकयज्ञैः स्वयं यजेतेत्येके ॥७॥**

शूद्र चौथो वर्ण हो । उसको एक नै जन्म हुन्छ । साँचो बोल्नु, नरिसाउनु र पवित्रता उसका पनि धर्म हुन् । उ आचमनको सट्टा हातगोडा धुन सक्दछ । कसैको विचारमा उ श्राद्ध पनि गर्न सक्दछ । उसले आश्रितजनको भरणपोषण गर्नू तथा आफ्नी पत्नीसँग सम्बन्ध राख्नू । माथिल्ला जातको सेवा गर्नू र तिनबाट आजीविका पाउनू । तिनका पुराना जुत्ता, छाता, कपडा, कूर्च? र जुठो खाना खानू । उ शिल्प पेसा पनि गर्न सक्दछ । आश्रय दाताले उसको पालनपोषण गर्नू । त्यस्तै उसले स्वामीका लागि पनि गर्नू । उसको धन नै उसको सम्पत्ति हो । नमस्कार नै उसको मन्त्र मानिएको छ । कसैको मतमा उ पाकयज्ञ पनि आफैं यजन गर्न सक्दछ ।

**सर्वे चोत्तरोत्तरं परिचरेयुरार्यानार्ययोर्व्यतिक्षेपे कर्मणः साम्यम् साम्यम् ॥८॥**

सबै वर्णले आफूभन्दा माथ्लो वर्णको सेवा गर्नू । आर्य र अनार्य सम्मिश्रण हुँदा सबै कर्म समानरुपले अवश्य गर्नू ।

॥ इति गौतमीये धर्मशास्त्रे दशमोऽध्यायः ॥१०॥
॥ गौतमीय शर्मशास्त्र, दशौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-६०+८=६८
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ६८



## ॥ अथैकादशोऽध्यायः ॥
## (एघारौं अध्याय)

### । अथ राजधर्मवर्णनम् ।
### (राजधर्म)

**राजा सर्वस्येष्टे ब्राह्मणवर्जं साधुकारी स्यात् साधुवादी त्रय्यामान्वीक्षिक्याञ्चाभिविनीतः शुचिर्जितेन्द्रियो गुणवत्सहायोपायसम्पन्नः समः प्रजासु स्याद्धितञ्चासां कुर्वीत तमुपर्यासीनमधस्था उपासीरन्नन्ये ब्राह्मणेभ्यस्तेऽप्येनं मन्येरन् ॥१॥**

राजाले ब्राह्मणलाई छोडी सबैमाथि शासन गरुन् । ऊ शुभकर्म गर्ने, साँचो बोल्ने, वेद र तर्कमा सुशिक्षित, इमानदार, जितेन्द्रिय, गुणवान् साथिहरु भएको, उपायले सम्पन्न र सबै प्रजामाथि समान व्यवहार गर्ने हुनू तथा तिनको भलो गर्नू । माथि बसेका तिनको तल बसेर ब्राह्मण बाहेक सबैले सेवा गर्नू । तर, ब्राह्मणले पनि उनको मान गर्नू ।

**वर्णानाश्रमांश्च न्यायतोऽभिरक्षेच्चलतश्चैनान् स्वधर्मे स्थापयेद्धर्मस्थो ह्यंशभाग्भवतीति विज्ञायते ॥२॥**

उनले वर्ण र आश्रमको न्यायपूर्वक रक्षा गर्नू तथा आफ्नो धर्मबाट विचलित हुनेलाई तिनको धर्ममा स्थापित गराउनू । धर्ममा रहेर नै ऊ करको अधिकारी हुन्छ भनी मानिन्छ ।

**ब्राह्मणञ्च पुरोदधीत विद्याभिजनवाग्रूपवयः शीलसम्पन्नं न्यायवृत्तं तपस्विनं तत्प्रसूतः कर्माणि कुर्वीत ब्रह्मप्रसूतं हि क्षत्रमृध्यते न व्यथत इति च विज्ञायते ॥३॥**

विद्या, उच्चकुल, वाणी, रुप, यौवन र शीलसम्पन्न, न्यायशील तथा तपस्वी ब्राह्मणलाई पुरोहित नियुक्त गर्नू तथा उनैको मार्गदर्शनमा कर्महरु गर्नू । ब्राह्मणद्वारा मार्गमा राखिएको क्षत्रिय समृद्ध हुन्छ, व्यथित हुँदैन भनी मानिन्छ ।

**यानि च दैवोत्पातचिन्तकाः प्रब्रूयुस्तान्याद्रियेत तदधीनमपि ह्येके योगक्षेमं प्रतिजानते**

**शान्तिपुण्याहस्वस्त्ययनायुष्यमङ्गलसंयुक्तान्याभ्युदयिकानि विद्वेषणसंवननाभिचारद्विषद्व्यृद्धिसंयुक्तानि च शालाग्नौ कुर्याद्यथोक्तमृत्विजोऽन्यानि ॥४॥**

जुन कुरा ज्योतिषी भन्दछन् राजाले त्यसको आदर गर्नू । कसैको विश्वास छ कि योग तथा क्षेम उनका अधिनमा पनि हुन्छ । ग्रहशान्ति, पुण्यकर्म, स्वस्त्ययन, आयुवृद्धि तथा मङ्गल विषयका अभ्युदय कर्मलाई तथा शत्रुको विद्वेषण, वशीकरण तथा समृद्धि- विनाशसँग सम्वन्धित कर्म यज्ञशालाको अग्निमा गर्नू । ऋत्विजले अरु कर्म पनि विधिपूर्वक गर्नू ।

**तस्य व्यवहारो वेदो धर्मशास्त्राण्यङ्गान्युपवेदाः पुराणं देशजातिकुलधर्माश्चाम्नायैरविरुद्धाः प्रमाणं कर्षकवणिक्पशुपालकुसीदिकारवः स्वे स्वे वर्गे तेभ्यो यथाधिकारमर्थान् प्रत्यवहृत्य धर्मव्यवस्था न्यायाधिगमे नर्कोऽभ्युपायस्तेनाभ्यूह्य यथास्थानं गमयेद्विप्रतिपत्तौ त्रयीविद्यवृद्धेभ्यः प्रत्यवहृत्य निष्ठां गमयेत्तथा ह्यस्य निःश्रेयसं भवति ब्रह्मक्षत्रेण सम्प्रवृत्तं देवपितृमनुष्यान् धारयतीति विज्ञायते ॥५॥**

न्यायका सम्बन्धमा–वेद, धर्मशास्त्र, वेदाङ्ग, उपवेद, पुराण तथा देश, जाति र कुलधर्म जुन शास्त्रविरोधी हुँदैन त्यो प्रमाण हो । किसान, व्यापारी, पशुपालक, ब्याजखोर, तथा शिल्पकारले आआफ्नो वर्गमा प्रचलित धर्म अनुसार न्याय प्राप्त गर्नू । तिनबाट अधिकार अनुकूल नियम जानेर राजाले धर्मको व्यवस्था गर्नू । न्याय खोज्न तर्क राम्रो तरिका हुन्छ । त्यो मार्फत छानबिन गरी न्यायलाई उचित स्थितिमा पुर्‍याउनू । शङ्का हुँदा वेदविद्यामा पारङ्गत हुनेसँग परामर्श गरी न्यायलाई निश्चित गर्नू । यसरी नै यसको कल्याण हुन्छ । ज्ञान र बल प्रवृत्त भएर नै देवता, पितृ र मनुष्यलाई धारण गर्दछन् भनी मानिन्छ ।

**दण्डो दमनादित्याहुस्तेनादान्तान् दमयेद्वर्णाश्रमाश्च स्वकर्मनिष्ठाः प्रेत्य कर्मफलमनुभूय ततः शेषेण विशिष्टदेशजातिकुलरूपायुः**

**श्रुतवृत्तवित्तसुखमेधसो जन्म प्रतिपद्यन्ते विद्यां च विपरीता नश्यन्ति तानाचार्योपदेशो दण्डश्च पालयते तस्माद्राजाचार्यावनिन्द्यावनिन्द्यौ ॥६॥**

दमन गर्नाले दण्ड हुन्छ भनेर भनिन्छ । यसैले राजाले उच्छृङ्खल व्यक्तिलाई दमन गर्नू । वर्ण तथा आश्रम धर्मको पालना गर्ने आफ्नो कर्ममा रहेका व्यक्ति मरेर आफ्नो कर्मको फल भोगेपछि बचेको कर्मले विशिष्ट देश, जाति, कुल, रुप, आयु, ज्ञान, शील, वित्त, सुख तथा वृद्धिले युक्त भई पुनः जन्म तथा विद्या प्राप्त गर्दछन् । यसको विपरीत आचरण गर्ने व्यक्ति नष्ट हुन्छन् । आचार्यको उपदेश तथा राजाको दण्ड पालना गर्नु पर्दछ । यसैले राजा तथा आचार्य निन्दायोग्य हुँदैनन् ।

॥ इति गौतमीये धर्मशास्त्रे एकादशोऽध्यायः ॥११॥
॥ गौतमीय शर्मशास्त्र, एघारौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-६८+६=७४
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ७४



## ॥ अथ द्वादशोऽध्यायः ॥
## (बाह्रौं अध्याय)

### । अथ विविधपापकरणे दण्डविधानवर्णनम् ।
### (विभिन्न पापका दण्ड)

**शूद्रो द्विजातीनभिसन्धायाभिहत्य च वाग्दण्डपारुष्याभ्यामङ्गमोच्यो येनोपहन्यादार्यस्त्त्ययभिगमने लिङ्गोद्धारः स्वहरणञ्च गोप्ता चेद्वधोऽधिकोऽथ हास्य वेदमुपश्रृण्वतस्त्रपुजतुभ्यां**

**श्रोत्रप्रतिपूरणमुदाहरणे जिह्वाच्छेदो धारणे शरीरभेद आसनशयनवाक्पथिषु समप्रेप्सुर्दण्ड्यः शतम्॥१॥**

शूद्रले यदि द्विजलाई वचन र दण्डको कठोरताले बलपूर्वक प्रहार गर्दछ भने राजाले उसको त्यही अङ्ग काट्नू जुन अङ्गले ऊ हिर्काउँदछ । आर्य स्त्रीलाई सम्भोग गरे उसको जननेन्द्रिय काट्नू र धन खोस्नू । यदि ऊ उनको रक्षक पनि छ भने त अझ ठूलो दण्डको विधान छ । वेद सुन्ने शूद्रलाई उसका कानमा राँग र लाख भर्नू, उच्चारण गरे जिब्रो छेदन गर्नू र धारण गरे शरीर भेदनको दण्ड हुन्छ । आसन, शयन, वाणी तथा मार्गमा समानता चाहने शुद्रलाई सय मुद्राको दण्ड तिराउनू ।

**क्षत्रियो ब्राह्मणाक्रोशे दण्डापारुष्ये द्विगुणमध्यर्धं वैश्योब्राह्मणस्तु क्षत्रिये पञ्चाशत्तदर्द्धं वैश्ये न शूद्रे किञ्चित् ब्राह्मणराजन्यवत् क्षत्रियवैश्यावष्टापाद्यं स्तेयकिल्विषं शूद्रस्य द्विगुणोत्तराणीतरेषां प्रतिवर्णं विदुषोऽतिक्रमे दण्डभूयस्त्वम्॥२॥**

यदि क्षत्रियले ब्राह्मणलाई कराएर बोले वा लौरोले कठोरता देखाए दोबर अर्थात दुई सय मुद्रा दण्ड दिनू । वैश्यले यसो गरे त्यसको डेढ गुना अर्थात दुई सय पचास मुद्रा दण्ड दिनू । यदि ब्राह्मण क्षत्रियलाई यस्तो गर्दछ भने पचास मुद्रा र वैश्यका साथ गरे आधा अर्थात पच्चीस मुद्रा दण्ड लिनू । शूद्रसँग यस्तो व्यवहार गरे ब्राह्मणलाई दण्ड नदिनू । ब्राह्मण तथा क्षत्रीय परस्पर दुर्व्यवहार गर्दा जति दण्डका भागी हुन्छन् । वैश्य तथा क्षत्रिय पनि त्यति नै दण्डको भागी हुन्छन् । चोरी गर्दा शूद्रबाट धनको आठ गुना दण्ड लिनू । अन्य वर्णसँग उत्तरोत्तर दोबर दण्ड लिनू । यसरी नै विद्वानको अनादर गर्दा प्रत्येक वर्णका मानिस आफूभन्दा तल्लो वर्णको मानिसबाट अधिक दण्ड लिन्छ ।

**फलहरितधान्यशाकादाने पञ्चकृष्णलमल्पे पशुपीडिते स्वामिदोषः पालसंयुक्ते तु तस्मिन् पथि क्षेत्रेऽनावृते पालक्षेत्रिकयोः पञ्च माषा गवि षडुष्ट्रखरेऽश्वमहिष्योर्दैशाजाविषु द्वौ द्वौ सर्वविनाशे शतं शिष्टाकरणे प्रतिषिद्धसेवायाञ्च नित्यं चैलपिण्डादूर्ध्वं स्वहरणञ्च**

**गोऽग्न्यर्थे तृणमेधान् वीरुध वनस्पतीनाञ्च पुष्पाणि स्ववदाददीत फलानि चापरिवृतानाम् ॥३॥**

फल, हरियो बाली तथा सागपात त्यसको (धनीलाई नसोधी) लिएमा पाँच रत्ती दण्ड हुन्छ । पशुले खेतमा अलिकति नोक्सान गरे त्यो स्वामीको आफ्नो दोष हुन्छ । पशुका साथ गोठालो पनि भएर बाटो छोडी खेतमा पसी नोक्सान गरे पशुपालक र खेतधनी दुवै दोषी हुन्छन् । गाई बैलबाट नोक्सान भए पाँच माषा, ऊँट तथा गधाबाट भए छ माषा, घोडा तथा भैंसीबाट भए दश माषा, भेडाबाख्राबाट भए दुई-दुई माषा, सारा खेती सखाप पारे सय माषा दण्ड दिनुपर्ने हुन्छ । शिष्टकर्म नगर्दा तथा निषिद्ध कर्म गर्दा सधैं वस्त्र र भोजनभन्दा बाहेकका जे हुन् ती सबै धन लिनू । गाई तथा अग्निका लागि घाँस तथा इन्धन तथा बेल तथा ठूला रुखका फूल तथा नबारिएका वृक्षका फल आफ्नो ठानी लिनू ।

**कुसीदवृद्धिर्धर्म्या विंशतिः पञ्चमाषकी मासं नातिसांवत्सरीमेके चिरस्थाने द्वैगुण्यं प्रयोगस्य भुक्ताधिर्न वर्द्धते दित्सतोऽवरुद्धस्य च चक्रकालवृद्धिः कारिताकायिकाशिखाधिभोगाश्च कुसीदं पशूपजलोमक्षेत्रशतवाह्येषु नातिपञ्चगुणम जडापोगण्डधनं दशवर्षभुक्तं परैः सन्निधौ भोक्तुरश्रोत्रियप्रव्रजितराजन्यधर्मपुरुषैः पशुभूमिस्त्रीणामनतिभोगः ॥४॥**

ब्याजको धर्मसङ्गत वृद्धि बीस कार्षापणमा पाँच माषा प्रतिमहिना हो । कसैका मतमा एक वर्षभन्दा बढी हुँदा ब्याज नलिनु भन्ने छ । बन्धकी राखिएको वस्तुको भोग ऋणदाताले गरे ऋणको ब्याज लाग्दैन । ऋण तिर्न खोज्दा साहुले रोके ब्याज बढ्दैन । वृद्धि दुई थरिको हुन्छ । चक्रवृद्धि तथा कालवृद्धि । ब्याज चार प्रकारका हुन्छन् । कारिता (निश्चित गरिएको नगद), कायिका ( शारीरिक परिश्रमले तिरिने), शिखा (दैनिक बढ्ने) तथा अधिभोगा (कुनै वस्तुको प्रयोगले दिइने) । पशु, उब्जनी, ऊन, तथा सैयौं पटक जोतिएका खेतमाथि ब्याज पाँच गुनाभन्दा बढी हुनु हुँदैन । जड व्यक्ति र वालकलाई छोडी यदि कुनै मानिसको धन निरन्तर दश वर्षसम्म उसैका अगाडी अरुबाट

भोगिन्छ भने त्यो धन भोग गर्नेकै हुन्छ । तर, श्रोत्रिय ब्राह्मण, सन्यासी, राजा तथा धार्मिक व्यक्तिले भोगेको धन तिनको हुँदैन । पशु, भूमि र स्त्रीको अति भोग गर्न हुँदैन ।

**ऋक्थभाज ऋणं प्रतिकुर्युः प्रातिभाव्यवणिक्शुल्कमद्यद्यूतदण्डान् पुत्रा नह्याभवेयुर्निध्यन्नादियाचितावक्रीताधेया नष्टाः सर्वे न निन्दिता न पुरुषापराधेन ॥५॥**

बाबुले गरेको जमानतको धन, व्यापार कर, मद्यपानको ऋण, जूवाको ऋण तथा दण्ड आदि छोराले नतिर्नू । पैतृक सम्पत्तिको हकभोग लिनेले बाबुको ऋण तिर्नू । नाशिनुमा व्यक्तिको अपराध छैन भने कोष, अन्न तथा मागेर तथा किनेर नासो राखिएको पदार्थ नष्ट भए ती सबै व्यक्ति जसकोमा उक्त नासो राखिएको छ ती निन्दनीय हुँदैनन् ।

**स्तेनः प्रकीर्णकेशो मुसली राजानमियात् कर्माचक्षाणः पूतो वधमोक्षाभ्यामध्नन्नेनस्वी राजा ॥६॥**

चोर्नेले आफ्नो केश खोली हातमा मूसल लिएर आफूले गरेको दुष्कर्म भन्दै राजा कहाँ जानू । यदि ऊ राजाले मूसलले हिर्काउँदा मर्दछ वा बाँच्दछ भने पवित्र हुन्छ । यदि राजाले मूसलले नहिर्काए उ आफैं चोरीको पापको भागी हुन्छ ।

**न शारीरो ब्राह्मणदण्डः कर्मवियोगविख्यापनविवासनाङ्ककरणान्यप्रवृत्तौ प्रायश्चित्ती स चौरमयः सचिवो मतिपूर्वे प्रतिग्रहीताप्यधर्मसंयुक्ते पुरुषशक्त्यपराधानुबन्धविज्ञानाद्दण्डनियोगोऽनुज्ञानं वा वेदवित् समवायवचनाद् वेदवित्समवायवचनात् ॥७॥**

ब्राह्मणका लागि शारीरिक दण्डको विधान छैन । राजाले उसलाई दुष्कर्मबाट हटाउनू, उसले गरेको अपराध सबैलाई भन्नू, उसलाई देश निकाला गर्नू तथा

उसका शरीरमा अपराधीका चिह्न बनाउन लगाउनू । राजा यसो गर्न प्रयाश गर्दैन भने उसले नै प्रायश्चित गर्नुपर्ने हुन्छ । चोरीका सामान लिने मानिस पनि थाहा पाईपाई अधर्मको काममा सहभागी हुने हुनाले गर्दा त्यो कर्ममा सहायक तथा चोरसरह हो । अपराधीको शक्ति, अपराध तथा दोषलाई जानी वा वेद आदि शास्त्र जान्नेका भनाईबाट जानकारी लिई राजाले तिनका लागि दण्डको विधान गर्नू ।

॥ इति गौतमीये धर्मशास्त्रे द्वादशोऽध्यायः ॥१२॥
॥ गौतमीय शर्मशास्त्र, बाह्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥

आदितः गद्यपद्यानां समष्ट्यङ्काः-७४+७=८१
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ८१

## ॥ अथ त्रयोदशोऽध्यायः ॥
## अथ साक्षीणां विधावर्णनम् ।

**विप्रतिपत्तौ साक्षिणी मिथ्यासत्यव्यवस्था बहवः स्युरनिन्दिताः स्वकर्मसु प्रात्ययिका राज्ञाञ्च निष्प्रीत्यनभितापाश्चान्यतरस्मिन्नपि शूद्रा ब्राह्मणस्त्वब्राह्मणवचनादनवरोध्योऽनिबद्धश्चेन्नासमवेता पृष्टाः प्रब्रूयुरवचने च दोषिणः स्युः स्वर्गः सत्यवचने विपर्यये नरकः । अनिबद्धैरपि वक्तव्यं पीडाकृते निबद्धे प्रमत्तोक्ते च साक्षिसभ्य राजकर्तृषु दोषो धर्मतन्त्रपीडायां शपथेनैके सत्यकर्मणा तद्देवराजब्राह्मणसंसदि स्यादब्राह्मणानाम् ॥१॥**

विवाद्मा साँचो र झूटोको निर्णय साछीका वशमा हुन्छ । साछी अनेक हुनु पर्दछ । ती निन्दाले रहित, आफ्नो कर्ममा लागिपर्ने, विश्वासपात्र र राजाको प्रेम वा क्रोध नखेपेका हुनु पर्दछ । वैकल्पिकरुपमा उ शूद्र पनि हुन सक्दछ । नबोलाई आएको ब्राह्मणलाई अब्राह्मणले भन्दैमा बोल्न नरोक्नू । छुट्टाछुट्टै

बोलाइएकाहरुले राजाले प्रश्न गर्दा उत्तर दिनू, नदिए दोषी हुन्छन्। साँचो बोल्नाले स्वर्ग पाइन्छ उल्टोमा नरक। बोलाइएको साछी विरामी भए वा पागलको जस्तो कुरा गर्न थाले नबोलाई आएका साछीबाट बयान लिनू। धर्मन्याय नभए त्यसको दोष साछी, सभासद र राजकर्मचारीलाई जान्छ। कसैका विचारमा साछीको बयान किरिया ख्वाई लिनु पर्दछ भन्ने पनि छ। अब्राह्मणको शपथ-ग्रहण कुनै देवताको सामु वा राजा वा ब्राह्मणहरुको सभामा गर्नू।

**क्षुद्रपश्वनृते साक्षी दश हन्ति गोऽश्वपुरुषभूमिषु दशगुणोत्तरान् सर्वं वा भूमौ हरणे नरको भूमिवदप्सु मैथुनसंयोगे च पशुवन्मधुसर्पिषोर्गोवद्वस्त्रहिरण्यधान्यब्रह्मसु यानेष्वश्ववन्मिथ्यावचने याप्यो दण्डयश्च साक्षी नानृतव च ने दोषो जीवनञ्चेत्तदधीनं न तु पापीयसो जीवनं राजा प्राडिवाको ब्राह्मणो वा शास्त्रवित् प्राड्विवाको मध्यो भवेत् संवत्सरं प्रतीक्षेत प्रतिभायां धेन्वनडुत्स्त्रीप्रजनसंयुक्तेषु शीघ्रमात्ययिके च सर्वधर्मेभ्यो गरीयः प्राड्विवाके सत्यवचनं सत्यवचनम्॥२॥**

क्षुद्र पशुका विवादमा भूटो बोले साछीले दश वटा मार्दछ। गाई, घोडा, पुरुष तथा जमिनको विवादमा बोले क्रमैले दश-दश गुना मार्दछ वा आफ्नो सर्वनाश गर्दछ। जमिनको स्वामित्वको विषयमा भूटो बोले नरक पाउँदछ। जलका विषयमा जमिनको सरह पाप लाग्दछ। मैथुनका विषयमा पशुको समान, मह र घिउका विषयमा गाईको समान तथा कपडा, सुन, अनाज र वेदका विषयमा एवं यानका विषयमा भूटो बोले घोडाका विषयमा भूटो बोलेको सरह पाप लाग्दछ। भूटो बोलेमा साछीलाई हटाउन सकिन्छ तथा उ दण्डको भागी हुन्छ। यदि कुनै निर्दोष मानिस बच्दछ भने भूटो बोल्न पनि दोष छैन तर कुनै पापीको जीवन बचाउन राजा, न्यायाधीश वा शास्त्रज्ञ ब्राह्मणले प्रयाश नगर्नू। न्यायाधीश दुवै पक्षका बिचमा निष्पक्ष रहन्छ। साँचो कुरा प्रकाश पार्न उसले एक वर्षसम्म कुर्नू। गाई, साँढे र स्त्रीका प्रजनन सम्बन्धी विवादमा तथा अत्यावश्यक विवादका विषयमा चाँडै निर्णय गर्नु पर्दछ। न्यायाधीशका सामु साँचो बोल्नु सबै कर्तव्यभन्दा ठूलो कर्तव्य हो।

॥ इति गौतमीये धर्मशास्त्रे त्रयोदशोऽध्यायः ॥१३॥
॥ गौतमीय शर्मशास्त्र, तेह्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-८१+२=८३
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ८३



## ॥ अथ चतुर्दशोऽध्यायः ॥
## अथ आशौचवर्णनम् ।

**शावमाशौचं दशरात्रमनृत्विग्दीक्षितब्रह्मचारिणां सपिण्डानामेकादशरात्रं क्षत्रियस्य द्वादशरात्रं वैश्यस्यार्द्धमासमेकं मासं शूद्रस्य, तच्चेदन्तः पुनरापतेत्तच्छेषेण शुद्धेयरन्, रात्रिशेषे द्वाभ्याम्, प्रभाते तिसृभिः, गोब्राह्मणहतानामन्वक्षं राजक्रोधाच्च युद्धे प्राणोनाशकशस्त्राग्निविषोदकोद्वन्धनप्रपतनैश्चेच्छताम्, पिण्डनिवृत्तिः सप्तमे पञ्चमे वा ॥१॥**

ऋत्विज्, दीक्षित र ब्रह्मचारीबाहेक अरुलाई जुठो दश रातको हुन्छ । सपिण्डीका लागि एघार रात, क्षत्रियका लागि बाह्र रात, वैश्यका लागि आधा महिना र शूद्रका लागि एक महिनासम्म हुन्छ । जुठो खप्टिए पहिलोको बाँकी दिनमा नै चोखिन्छ । पहिलो आशौच सकिन एक रात बाँकी भए त्यसको दुई दिनपछि शुद्धि हुन्छ । पहिलो आशौच सकिने दिन बिहानै अर्को जुठो परे त्यसपछिका तीन दिनमा शुद्धि हुन्छ । गाई र ब्राह्मणद्वारा मारिने मानिसको आशौच मृत्यु पछि तुरुन्त शुद्ध हुन्छ । राजाको रिसले, युद्धमा, अनशन बसेर, शस्त्र-अग्नि-विष- जल-फाँसीद्वारा र अग्लो ठाऊँबाट हाम फालेर मर्नेको आशौच पनि मृत्यु भए लगत्तै शुद्धि हुन्छ । सातौं वा पाँचौं पुस्तामा पिण्ड छुट्दछ ।

**जननेऽप्येवं, मातापित्रोस्तन्मातुर्वा गर्भमाससमा रात्रीः, स्रंसने गर्भस्य त्र्यहं वा श्रुत्वा चोर्ध्वं दशम्याः पक्षिण्य, सपिण्डयोनिसम्बन्धे सहध्यायिनी च, सब्रह्मचारिण्येकाहं श्रोत्रिये चोपसम्पन्ने ॥२॥**

जन्मको आशौच पनि यही अनुसार नै हुन्छ । गर्भपात हुँदा मातापिताका लागि वा माताका लागि मात्र गर्भमासतुल्य दिन आशौच हुन्छ । गर्भस्राव हुँदा तीन दिनको आशौच हुन्छ । यदि जन्ममरणको खबर दश दिन बितेपछि थाहा पाइए दुई दिन र एक रात (पक्षिणी) आशौच रहन्छ । असपिण्डी जो सँग रगतको नाता छ, जो सहपाठी छ तिनको मरणमा तथा सँगै बसेर ब्रह्मचर्य पालना गरेकाको र वेदपाठी ब्राह्मणको मरणाशौच एक दिनको हुन्छ ।

**प्रेतोपस्पर्शने दशरात्रमाशौचमभिसन्धाय चेदुक्तं वैश्यशूद्रयोरार्त्तवीर्व्वापूर्वयोश्चत्र्यह वाचार्यतत्पुत्रस्त्रीयाज्यशिष्येषु चैवमवरश्चेद्वर्णः पूर्वं वर्णमुपस्पृशेत् पूर्वोवावरं तत्र शावोक्तमाशौचम् ॥३॥**

जानाजान लाश छोए दश दिनको आशौच हुन्छ वैश्य र शूद्रको आशौचका सम्बन्धमा पछि बताइन्छ । ब्राह्मण र क्षत्रियका पत्नीका लाशलाई छुँदा तीन दिन आशौच हुन्छ । आचार्य, आचार्यपुत्र, आचार्यपत्नी, याजक र शिष्यको मृत्युमा पनि यही अनुसारको आशौच हुन्छ । यदि नीच वर्णका व्यक्तिले उच्च वर्णका व्यक्तिलाई छुन्छन् भने वा उच्च वर्णकाले नीच वर्णकालाई छुन्छन् भने त्यसमा पनि त्यही आशौच हुन्छ जुन मृत्युमा बताइएको छ ।

**पतितचण्डालसूतिकोदक्याशवस्पृष्टितत्स्पृष्ट्युपस्पर्शने सचैलोदकोपस्पर्शनाच्छुध्येच्छवानुगमने च शुनश्च यदुपहन्यादित्येके, उदकदानं सपिण्डैः कृतचूडस्य, तत्स्त्रीणाञ्चानतिभोग, एकेऽप्रदत्तानाम्, अधः शय्यासनिनो ब्रह्मचारिणः सर्वे न मार्जयेरन्न**

**मांसं भक्षयेयुराप्रदानात् प्रथमतृतीयपञ्चमसप्तमनवमेषूदकक्रिया वाससाञ्च त्यागः अन्त्ये त्वन्त्यानाम् ॥४॥**

पतित, चाण्डाल, सुत्केरी, रजस्वला, लाश छुने र लाश छुनेलाई स्पर्श गर्ने वा मलाम जानेहरू वस्त्र सहित जलमा स्नान गर्नाले शुद्ध हुन्छन् । कसैकसैले कुकुर मारेमा पनि यसो गर्नू भन्दछन् । चूडाकर्म पछि वालकको मृत्यु भएमा सपिण्डीबाट उसका लागि जलदान दिइन्छ । यो (आशौच) अवधिमा स्त्रीको अतिभोग वर्जित छ । कुनै स्मृतिकारले अविवाहिता कन्याको मरणमा पनि जलदान गर्ने विधान बताएका छन् । जलदान दिनेजति सबैले जलदान दिँदासम्म जमिनमा सुत्नू बस्नू, ब्रह्मचर्यमा रहनू, सरसफाई नगर्नू र मासु नखानू । जलदान दिने कार्य पहिलो, तेश्रो, पाँचौं, सातौं वा नवौं दिन हुन्छ भने यो बेलामा अस्त्र त्याग गरिन्छ । शूद्रको यो कर्म अन्तिम दिन हुन्छ ।

**दन्तजन्मादि मातापितृभ्याम्, तूष्णीं माता, बालदेशान्तरितप्रव्रजितासपिण्डानां सद्यः शौचं राज्ञाञ्च कार्यविजरोधाद् ब्राह्मणस्य च स्वाध्यायानिवृत्त्यर्थं स्वाध्यायानिवृत्त्यर्थम् ॥५॥**

दाँत उम्रि सकेपछि मर्ने बालकका लागि आमाबाबुबाट जलदान दिइन्छ । आमाले बिना मन्त्र जलदान दिनू । बालक, विदेशमा गएका, सन्यासी तथा असपिण्डीको मृत्युमा तुरुन्त शुद्धि हुन्छ । राजाहरुको हकमा कार्यमा अवरोध नआओस् भनेर तथा (वास्तविक) ब्राह्मणको हकमा स्वाध्यायमा रुकावट नआओस् भनी तुरुन्त शौच हुन्छ ।

॥ इति गौतमीये धर्मशास्त्रे चतुर्दशोऽध्यायः ॥१४॥
॥ गौतमीय शर्मशास्त्र, चौधौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-८३+५=८८
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ८८



## ॥ अथ पञ्चदशोऽध्यायः ॥
## अथ श्राद्धविवेकवर्णनम् ।

**अथ श्राद्धममावस्यायां पितृभ्यो दद्यात् पञ्चमीप्रभृतिषु वापरपक्षस्य यथाश्राद्धं सर्वस्मिन् वा द्रव्यदेशब्राह्मणसन्निधाने वा कालनियमः, शक्तितः प्रकर्षेद् गुणसंस्कारविधिमन्नस्य, नवावरान् भोजयेदयुजो यथोत्साहं वा ब्राह्मणान् श्रोत्रियान् वाग्रूपवयःशीलसम्पन्नान् युवभ्योदानं प्रकममेके पितृवन्नच तेन मित्रकर्म कुर्य्यात् ॥१॥**

अब श्राद्धको वर्णन गरिन्छ-औँसीमा पितृहरुलाई श्राद्ध दिनू वा अर्को पक्षका पञ्चमी आदि तिथिमा श्राद्ध गर्नू । अथवा श्रद्धा अनुसार सबै दिनमा श्राद्ध हुन सक्दछ । अथवा द्रव्य, उचित स्थान तथा ब्राह्मण जब उपलब्ध हुन्छ तबमात्र श्राद्धको समय निश्चित गर्नू । गच्छेअनुसार भोजनका गुण र पकाउने विधि उत्तम गर्नू । कममा पनि नौ वा आफ्नो उत्साह अनुसार बिजोर संख्याका वाणी, रुप उमेर र शीलले सम्पन्न वेदपाठी ब्राह्मणलाई खुवाउनू । कसैको मतमा पहिले युवा ब्राह्मणलाई दान दिनू । तिमध्ये प्रत्येकलाई बाबुको सरह दान दिनू तथा मित्र बनाउने उद्देश्यले यसमा (पक्षपात) नगर्नू ।

**पुत्राभावे सपिण्डा मातृसपिण्डाः शिष्याश्च दद्युस्तदभावे ऋत्विगाचार्य्यौ, तिलमाषव्रीहियवोदकदानैर्मासं पितरः प्रीणन्ति मत्स्यहरिणरुरुशशकूर्मवराहमेषमांसैः संवत्सराणि गव्यपयःपायसैर्द्वादश वर्षाणि वार्ध्रीणसेन मांसेन कालशाकच्छागलोहखड्गमांसैर्मधुमिश्रैश्चानन्त्यम् ॥२॥**

पुत्रको अभावमा सपिण्ड, माता पक्षका सपिण्ड तथा शिष्यले श्राद्ध गर्नू । तिनको पनि अभावमा ऋत्विज् वा आचार्यले श्राद्ध दिनू । तिल-माष-चामल-जौ तथा जलको दानले पितृ एक महिनासम्म,

माछा-मृग-रुरुमृग- खरायो-कछुवा-बँदेल तथा भेडाको मासुले वर्षदिनसम्म, गाईको दूध तथा खीरले बाह्र वर्षसम्म, गैंडाको मासुले तथा मह मिश्रित कालशाक र बोका तथा रातो गैंडाको मासुले अनन्त कालसम्म तृप्त हुन्छन् ।

**नभोजयेत्**
**स्तेनक्लीवपतितनास्तिकतद्वृत्तिवीरहाग्रेदिधिषुदिधिषुपतिस्त्रीगामयाजकाजपालोत्सृष्टाग्निमद्यपकुचरकूटसाक्षिप्रातिहारीकानुपपतिर्यस्य च स कुण्डाशी सोमविक्रय्यगारदाही गरदावकीर्णिगणप्रेष्यागम्यागामिहिंस्र-परिवित्तपरिवेत्तृपर्य्याधातृत्यक्तात्मदुर्वलाः कुनखिश्यावदन्तश्वित्रिपौनर्भवकितवाजप्रेष्यप्रातिरुपकशूद्रापतिनिरा-कृतिकिलासी कुसीदी वणिक्शिल्पोपजीविज्यावादित्रतालनृत्यगीतशीलान् पित्रा चाकामेन विभक्तान् शिश्याश्चैके सगोत्रांश्च भोजयेदूदूर्ध्वं त्रिभ्यो गुणवन्तम् ॥३॥**

चोर, नपुंसक, पतित, नास्तिक, नास्तिकबाट पालिने, अग्न्याधान गरी त्यसलाई छोड्ने, त्यो केटो जो विवाहिता स्त्रीलाई विवाह गर्दछ, ती जेठी कन्याका पति जसको बहिनीको विवाह तिनको भन्दा पहिले भएको छ, स्त्रीबाट यज्ञ गराउने, ग्राम-याजक, भेडाबाख्रा पाल्ने, शराबी, आवारा, भरूटो साछी बस्ने, द्वारपाल, जार, जार राख्ने, पति जीवित छँदाछँदै अन्य पुरुषबाट जन्मनेको अन्न खाने, सोम बेच्ने, घर जलाउने, विष दिने, ब्रह्मचर्य-व्रत भङ्ग गर्ने, अनेकौंको दूत, अगम्याको गमन गर्ने, हिंसा गर्ने, भाईको पहिले विवाह हुने दाजु, दाजुभन्दा पहिले विवाह गर्ने भाई, त्यो दाजु जसको भाईले आफूभन्दा पहिले अग्न्याधान गरेको छ, त्यो भाई जसले दाजुले भन्दा पहिले अग्न्याधान गरेको छ, आमाबाबु तथा गुरुले बिना कारण छोडिदिएको, दुर्बल आत्मा हुने, भद्दा नङ हुने, कालो दाँत हुने, श्वेतकुष्ठी, पुनर्भूको छोरो, जुवाडे, बाख्रा चराउने, कम बोल्ने, शूद्राको पति, पाँच महायज्ञ निराकरण गर्ने, कुष्ठ रोगी, ब्याज लिने, व्यापारी, शिल्पकार, धनुषको डोरी-बाजा-ताल-नाच तथा गीतमा रुचि राख्ने, पिताबाट नचाहेर भिन्न गराइएको-यी मानिसलाई श्राद्धमा

भोजन नगराउनू । कसैको मतमा शिष्य र सगोत्रीलाई पनि श्राद्धमा नखुवाउनु भन्ने छ । तीनभन्दा बढी ब्राह्मणलाई भोजन गराउनू वा एउटा गुणवान् ब्राह्मणलाई भोजन गराउनू ।

**सद्यःश्राद्धी शूद्रातल्पगस्तत्पुरीषे मासं नयति पितृंस्तस्मात्तदहर्ब्रह्मचारी स्यात्, श्वचण्डालपतितावेक्षणे दुष्टं तस्मात्परिश्रिते दद्यात्तिलैर्वा विकिरेत् पङ्क्तिपावनो वा शमयेत्, पङ्क्तिपावनाः षडङ्गविज्ज्येष्ठसामिकस्त्रिणचिकेतस्त्रिमधुस्त्रिसुपर्णः पञ्चाग्निः स्नातको मन्त्रब्राह्मणविद्धर्मज्ञो ब्रह्मदेयानुसन्तान इति हविःषु दुर्बलादिन् श्राद्ध एवैके श्राद्ध एवैके ॥४॥**

जसले भर्खर श्राद्ध गरेर शूद्राको ओछ्यानमा उसलाई सम्भोग गर्दछ उसले महिना भरी आफ्ना पितृलाई उसको दिसापिसाबमा हाल्दछ । यसैले श्राद्धका दिन ब्रह्मचारी रहनू । कुकुर, चाण्डाल, तथा पतितबाट देखिए भोजन दोषयुक्त हुन जान्छ । यसैले श्राद्ध सबैतिरबाट घेरिएको स्थानमा गर्नू वा श्राद्धस्थल (एवं भान्छामा) तिल छर्नू वा पङ्क्तिपावनबाट त्यसको शान्ति गराउनू । यी व्यक्ति पङ्क्तिपावन हुन्छन्-वेदका छ अङ्ग सहित वेद जान्ने, ज्येष्ठ साम गाउने, नाचिकेत अग्निमा तीन पटक यजन गर्ने, मधुवाता इत्यादि ऋग्वेदका मन्त्र जान्ने वा त्यसको पाठ गर्ने, अन्वाहार्यपचन वा दक्षिण-गार्हपत्य-आहवनीय-सम्य तथा आवसथ्य नामका पाँच अग्निलाई राख्ने, विद्यास्नान पछि गृहस्थ बन्ने, मन्त्र तथा ब्राह्मणलाई जान्ने, धर्मजान्ने तथा त्यो जसका कुलमा वेदाध्ययनको परम्परा छ । हविर्यज्ञमा पनि यसरी नै ब्राह्मणको परीक्षा गर्नु पर्दछ । कसैको मत छ की दुर्बलादिलाई केवल श्राद्धमा नै खुवाउनू ।

॥ इति गौतमीये धर्मशास्त्रे पञ्चदशशोऽध्यायः ॥१५॥
॥ गौतमीय शर्मशास्त्र, पन्ध्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-८८+४=९२
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ९२



## ॥ अथ षोडशोऽध्यायः ॥
## अथ अनध्यायवर्णनम् ।

श्रवणादिवार्षिकीं प्रोष्ठपदीं वोपाकृत्याधीयीतच्छन्दांस्यर्द्ध पञ्चमासान् पञ्च दक्षिणायनं वा ब्रह्मचार्य्युत्सृष्टलोमा न मांसं भुञ्जीत द्वैमास्यो वा नियमो नाधीयीत वायौ दिवा पांसुहरे कर्णश्राविणि नक्तं वाणभेरीमृदङ्गगर्ज्जार्त्तशब्देषु च श्वश्रृगालगर्दभसंह्रादे लोहितेन्द्रधनुर्नीहारेष्वभ्रदर्शने चानृतौ मूत्रित उच्चारिते निशासन्ध्योदकेषु वर्षति चैके वलीकसन्तान आचार्य्यपरिवेषणे ज्योतिषोश्च ॥१॥

ब्रह्मचारीहरुले कपाल खौरेर वर्षाकालमा आउने साउन महिनाको पूर्णिमा आदि कुनै तिथिमा वा भदौको पूर्णिमामा उपाकर्म गरी साँढे चार महिनासम्म वा दक्षिणायनमा वेदको अध्ययन गर्नू । मासु नखानू । अथवा यो नियम केवल दुई महिनासम्म पालना गर्नू । दिनमा धूलो उडाउने हावा चल्दा, रातमा कानमा आवाज सुनिने हावा चल्दा वेदको अध्ययन नगर्नू । बाँसुरी, ढोल, तबला, बादलको गर्जन तथा पीडित व्यक्तिको आवाज आउँदा, कुकुर-स्याल र गधाको आवाज आउँदा, लोहित इन्द्रधनुष तथा तुवाँलो लाग्दा, बिना ऋतुको बादल देखिए, मूत्र र मल त्याग गरे पछि, रातमा तथा सन्ध्यामा, पानी परिरहँदा, बलेसी चुहिरहँदा, आचार्यलाई खाना पस्के पछि तथा सूर्य र चन्द्रलाई मण्डलले घेर्दा वेद अध्ययन नगर्नू ।

भीतो यानस्थः शयानः प्रौढपादः श्मशानग्रामान्तमहापथाशौचेषु पूतिगन्धान्तःशवदिवाकीर्त्तिशूद्रसन्निधाने शुक्तके चोद्गारे ऋग्यजुषञ्च सामशब्दे यावदाकालिका निर्घातभूमिकम्पराहुदर्शनोल्कास्तनयित्नुवर्षविद्युतः प्रादुष्कृताग्निष्वनृतौ विद्युति नक्तञ्चापररात्रात्त्रिभागादिप्रवृत्तौ सर्वमुल्का विद्युत्समेत्येकेषां । स्तनयित्नुरपराह्णेऽपि प्रदोषे सर्वं

**नक्तमर्द्धरात्रादहश्चेत् सज्योतिर्विषयस्थे च राज्ञि प्रेते विप्रोष्य चान्योन्येन सह ॥२॥**

डराएका बखत, यानमा बसेका बेलामा, सुतेर र आसनीमा गोडा राखेर वेद नपढ्नू । मसान तथा गाऊँको नजिक, राजमार्गका नजिक, आशौचमा, दुर्गन्धित स्थानमा, गाऊँभित्र लाश हुँदा, चाण्डाल र शूद्रको सामु तथा अमिलो डकार आउँदा बेदको अध्ययन नगर्नू । सामगानको आवाज जबसम्म कानमा पर्दछ तबसम्म ऋग्वेद र यजुर्वेद नपढ्नू । अन्तरिक्षमा उत्पातजन्य ध्वनि हुँदा, भूकम्प आउँदा, ग्रहणमा, उल्कापात हुँदा, बादल गर्जंदा, वर्षामा तथा बिजुली चम्कँदा त्यसबेला देखि शुरु गरी भोलिपल्ट त्यही बेलासम्म वेदको अध्ययन नगर्नू । यज्ञमा आगो बाल्ने समयमा तथा बिना ऋतुको बिजुली चम्कँदा वेदको अध्ययन वर्जित छ । रातमा पछिल्लो भागको तेश्रो प्रहरदेखि लिएर बिजुली मेघगर्जन आदि शुरु भए सारा दिन वेद पढ्न हुँदैन । केही स्मृतिकारको मतमा उल्का वेद नपढ्न विद्युतसमान हुन्छ । यदि बादलको गडगडाहट अपराह्ण वा प्रदोषकालमा हुन्छ भने रातभर वेद पढ्न हुँदैन । यदि बादलको गडगडाहट आधारातबाट शुरु हुन्छ भने भोलिपल्ट दिनको उज्यालो भएसम्म अर्थात सूर्यको प्रकाश भएसम्म वेद अध्ययन गर्न हुँदैन । देशका राजा परलोक हुँदा तथा विदेशबाट आएका साथि आपसमा भेट हुँदा वेद पढ्न हुँदैन ।

**सङ्कुलोपाहितवेदसमाप्तिच्छर्दिश्राद्धमनुष्यज्ञभोजनेष्वहोरात्रममावाष्या याञ्चद्व्यहं वा कार्त्तिकी फाल्गुन्याषाढी पौर्णमासी तिस्रोऽष्टकास्त्रिरात्रमन्त्यामेके अभितो वार्षिकं सर्वे वर्ष विद्युत्स्तनयित्नूसन्निपाते प्रस्यन्दिन्यूदूर्ध्वं भोजनादुत्सवे प्राधीतस्य च निशायां चतुर्मुहूर्तं नित्यमेके नगरे मानसमप्यशुचि श्राद्धिनामाकालिकमकृतान्नश्राद्धिकसंयोगे च प्रतिविद्यञ्च यावत् स्मरन्ति प्रतिविद्यञ्च यावत् स्मरन्ति ॥३॥**

भिडभाडमा, शुरु गरेको वेदको समाप्तिमा, बान्ता आउँदा, श्राद्धमा, अतिथियज्ञमा तथा विशेष भोजमा एवं औंसीमा एक दिनरात वा दुई दिन

वेदाध्ययन गर्नु हुँदैन । कार्तिक, फागुन र असारका पूर्णिमामा दुई दिनरात, तीनै अष्टकामा तीन रात तथा कसैको मतमा अन्तिम अष्टमीमा वेद अध्ययन गर्नु हुँदैन । सबैको भनाइमा वर्षाकालका शुरु र अन्तमा वेदाध्ययन नगर्नू । वर्षा, बिजुली, मेघगर्जन हुँदा र पानी छिट्याउँदा सबैले वेद अध्ययन नगर्नु भन्दछन् । खाना खाएपछि उत्सवमा वेद नपढ्नू । कसैको मतमा वेदाध्ययन शुरु गर्नेका रातमा सधैँ चार मुहूर्त वेद पढ्न हुँदैन । नगरमा तथा मन अपवित्र हुँदा वेद नपढ्नू । श्राद्ध गर्नेको तथा काँचो अन्नले श्राद्ध गरिने योगमा सोबेलादेखि भोलिपल्ट सोही समयसम्म वेद नपढ्नू । जबसम्म पढेको सम्भिmइन्छ तबसम्म वेद नपढ्नू (?)।

॥ इति गौतमीये धर्मशास्त्रे षोडशोऽध्यायः ॥१६॥
॥ गौतमीय शर्मशास्त्र, सोह्रौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥

आदितः गद्यपद्यानां समष्ट्यङ्काः-९२+३=९५
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ९५

## ॥ अथ सप्तदशोऽध्यायः ॥
## अथ भक्ष्याभक्ष्यप्रकरणम् ।

**प्रशस्तानां स्वकर्मसु द्विजातीनां ब्राह्मणो भुञ्जीत प्रति गृह्णीयाच्चैधोदकयबसवमूलफलमध्वभयाभ्युद्यतशय्यासनयानपयोदधिधानाशफरीप्रियङ्गुस्रङ्मा शाकान्यप्रणोद्यानि सर्वेषां पितृदेवगुरुभृत्यभरणे चान्यवृत्तिश्चेन्नान्तरेण शूद्रात् शुपालक्षेत्रकर्षककुलसङ्गतकारपितृपरिचारका भोज्यान्ना वणिक् चाशिल्पी नित्यमभोज्यं केशकीटावपन्नम् ॥१॥**

ब्राह्मणले आफ्नो कर्ममा रहेका सबै द्विजका हातका खानू तथा सबैको इन्धन, जल, भूस, कन्दमूल, फलफूल, मह, बिना डर दिइएको ओछ्यान, आसन, यान, दूध, दही, अन्न, माछा, कागुनु, माला, जङ्गली पशुबाट पाइने वस्तु

तथा सागपात आनाकानी नगरी स्वीकार गर्नू । यदि उसले ब्राह्मणको पेसा बाहेकका पेसा अपनाएको छ भने पनि पितृ, देवता, मान्यजन र आश्रितको भरणपोषणका लागि शूद्रलाई पनि नछोडी सबैले दिएको स्वीकार गर्नू । पशु चाहने, खेत जोत्ने, परिवारसँग मिलेर बस्ने र बाबुका सेवक-यी सबै भोजनयोग्य अन्नवाला हुन्छन् । व्यापारी पनि शिल्पीलाई छोडी भोजनयोग्य अन्नवाला हुन्छ । रौं र कीरा परेको अन्न नित्य भोजनको अयोग्य हुन्छ ।

**रजस्वलाकृष्णशकुनि पदोपहतं भ्रुणघ्नप्रेक्षितं गवोपघ्रातं भावदुष्टं शुक्तं कृवलमदधि पुनः सिद्धं पर्युषितमशाक-भक्ष्यस्नेहमांसमधून्युत्सृष्टपुंश्चल्यभिशस्तानपदेश्य दण्डिकतक्षकदर्यबन्धनिकचिकित्सकमृगयुकारुच्छिष्टभोजि गणविद्विषणामपाङ्क्त्यानां प्राक्दुर्बलाद् वृथान्नाचमनोत्थानव्यपेतानि समासमाभ्यां विषमसमे पूजान्तरानर्चितञ्च ॥२॥**

रजस्वलाले छोएको, कौवाले जुठो हालेको, गोडाले लत्याइएको, ब्रह्मघातीले देखेको, गाईले सुँघेको, विचारले दूषित, दहीबाहेकका अमिल्याइएका कुरा, दोहोर्‍याएर पकाइएका कुरा, साग-खानेतेल-मासु र महलाई छाडी अरु बासी कुरा, परित्यक्त, व्यभिचारिणी स्त्री, अभियुक्त, जसको नाम लिन पनि राम्रो मानिँदैन, राजाबाट दण्डाधिकारमा नियुक्त, सिकर्मी, कञ्जूस, कैदी, चिकित्सक, शिकारी, शिल्पकार, अरुको जुठो खाने, गणसँग शत्रूता राख्ने तथा ब्राह्मणको हारमा बसेर खान योग्य नहुनेको अन्न एवं अशक्तभन्दा अगाडी, देवतालाई नचढाइएको, आचमन र उत्थान नगरिएको, निम्न र उच्चस्तर मिसाएर र देवपूजाभित्र पूजा नगरिएको नखानू ।

**गोश्च क्षीरमनिर्दशायाः सूतके चाजामहिष्योश्च नित्यमाविकमपेयमोष्ट्रमैकशफञ्च स्यन्दिनीयमसूसन्धिनीनाञ्च याश्च व्यपेतवत्साः ॥३॥**

गाईको दूध बिहाएको दश दिन नबिती, बाख्री तथा भैंसीको दूध प्रसवकालमा, भेडी-ऊँटनी र एकखुरे पशुको दूध कहिल्यै एवं थुनबाट दूध आफैं

भर्ने-जम्ल्याहा बाच्छाबाच्छी जन्माउने र बाच्छाबाच्छी नभएको गाईको दूध पिउन योग्य हुँदैन ।

**पञ्चनखाश्चाश्लयकशशश्वाविद्गोधाखड्गकच्छपा उभयतोदत्केयलोमैकशफकलविङ्कप्लवचक्रवाकहंसाः काककङ्क-गृध्रश्येना जलजा रक्तथपादतुण्डा ग्राम्यकुक्कुटशूकरौ धेन्वनडुहौ चापन्नदावसन्नवृथामांसानि किसलयक्काकुलशुननिर्यासलोहिता व्रश्चनाः निचुदारुवकवलाकटिट्टिभमान्धातृनक्तञ्चरा अभक्ष्याः ॥४॥**

दुम्सी, खरायो, श्वाविद् ?, गोही, गैँडा र कछुवा बाहेक अरु पाँचनङ हुने जन्तु खान योग्य हुँदैनन् । तलमाथि नै दाँत हुने, कपाल हुने, रौं नहुने, एक खुरे, भङेरा, कलविंक नामक चरा, एकथरी चरा ?, चखेवा, हाँस, काग, ढुंगीफोर चरा, गिद्ध, बाज, जलमा उत्पन्न हुने पंक्षी, खुट्टा र चुच्चो रातो हुने चरा, घरपालुवा कुखुरा र सुँगुर, गाई र गोरु, मरेको, आगोले डढेको पशु तथा देवतालाई नचढाइएको मासु एवं पालुवा, खुम्म ?, लसुन, रातो खोटो वा चोप, कोटेरो, सारस, बकुल्ला, हुटिट्याउँ, मान्धाता? र रातमा उड्ने चरा अभक्ष्य हुन् ।

**भक्ष्याः प्रतुदा विष्किरा जालपादा मत्स्याश्चाविकृता वध्याश्च धर्मार्थेऽव्यालहता दृष्टदोषवाक्प्रशस्तान्यभ्युक्ष्योपयुञ्जीतोपयुञ्जीत ॥५॥**

चुच्चोले फोरेर खाने, नङ्गाले छरेर खाने, जालजस्ता खुट्टा हुने, विकृत नभएका माछा-यी धर्मका लागि वधयोग्य छन्, जुन सर्प आदि विषालु जन्तुबाट मारिएका छैनन् ती भक्ष्य हुन्छन् । जसलाई खान हुन्छ भनिएको छ तिनमा कुनै दोष देखिए पानीका छीटा छर्केर काममा ल्याउनू ।

॥ इति गौतमीये धर्मशास्त्रे सप्तदशोऽध्यायः ॥१७॥
॥ गौतमीय शर्मशास्त्र, सत्रौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-९५+५=१००

शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १००



## ॥ अथाष्टादशोऽध्यायः ॥
## अथ स्त्रीषु ऋतुकाले सहवासप्रकरणम् ।

**अस्वतन्त्रा धर्मे स्त्री नातिचरेद्भर्त्तारं वाक्चक्षुःकर्मसंयता पतिरपत्यलिप्सुर्देवराद्गुरुप्रसुतान्नर्त्तुमतीयात् पिण्डगोत्रऋषिसम्बन्धिभ्यो योनिमात्राद्वा नादेवरादितत्येके नातिद्वितीयं जनयितुरपत्यं समयादन्यत्र जीवतश्च क्षेत्रे परस्मात्तस्य द्वयोर्वा रक्षणाद्भर्त्तुरेव ॥१॥**

धर्मका विषयमा स्त्री स्वतन्त्र छैन उनले पतिको उल्लङ्घन नगर्नू । वाणी, चक्षु आदि इन्द्रिय तथा कर्मका विषयमा संयम राख्नू । यदि पति छैनन् र सन्तान चाहन्छे भने ससुरा आदि गुरुजनको आज्ञाले देवरबाट सन्तानको कामना गर्नू । आफ्नो ऋतुकाल खेर नफाल्नू । देवर पनि नभए पिण्ड-गोत्र-प्रवर सम्बन्धी वा योनिमात्रका सम्बन्धीबाट सन्तान पाउनू । कसैकसैको मतमा देवरबाहेक अरुसँग नगर्नू । उनले एक पटकभन्दा बढी यसो नगर्नू । कुनै सम्झौता गरिएको छैन भने सन्तान जन्माउनेकै हुन्छ । पति जीवित भए त्यो क्षेत्रीको हुन्छ । यदि पत्नीले अरु कसैबाट सन्तान पाएकी छ भने त्यो त्यस बाबुकै हुन्छ वा दुबैको हुन्छ अथवा पालनपोषणका कारण त्यो पतिकै हुन्छ ।

**नष्टे भर्त्तरि षाड्वार्षिकं क्षपणं श्रूयमाणेऽभिगमनं प्रव्रजिते तु निवृत्तिः प्रसङ्गात्तस्य द्वादशवर्षाणि ब्राह्मणस्य विद्यासम्बन्धे भ्रातरि चैवं ज्यायसि यवीयान् कन्याग्न्युपयमेषु षडित्येके ॥२॥**

यदि पति भागे पाँच वर्षसम्म पत्नीले संयम राख्नू । उसको पत्ता लागेपछि उसकैमा जानू । यदि उसले सन्यास लिएको छ भने उसका सबै प्रसङ्गबाट छुटेर आफूमाथि संयम राख्नू । विद्याको उद्देश्यले गएको ब्राह्मणका लागि

यस्तो समय बाह्र वर्षको हो । दाजु यसरी देश बाहिर हुँदा यो अवधि बितिसकेपछि भाईले कन्यादान, अग्न्याधान र विवाह गर्न सक्दछ । कुनै स्मृतिकारले यो अवधि छ वर्षको हुने पनि बताएका छन् ।

**त्रीन् कुमार्य्यृतूनतीत्य स्वयं युज्येतानिन्दितेनोत्सृज्य पित्र्यानलङ्कारान् प्रदानं प्रागृतोरप्रयच्छन् दोषी प्राग्वाससः प्रतिपत्तेरित्येके ॥३॥**

कन्याले तीन रजोदर्शन पछि बाबुले दिएका गहना उनलाई फर्काएर आफैं कुनै अनिन्दित पतिलाई प्राप्त गर्नू । तीन रजोदर्शन भन्दा पहिला कन्यादान नगर्ने दोषी हुन्छ । कसैकसैको मतमा जसले कपडा लगाउन जान्नुभन्दा पहिले कन्याको विवाह गर्दैन उ दोषको भागी हुन्छ ।

**द्रव्यादानं विवाहसिद्ध्यर्थं धर्मतन्त्रसंयोगे च शुद्रादन्यत्रापि शूद्राद्बहुपशोर्हीनकर्मणः शतगोरनाहिताग्नेः सहस्रगोश्चा सोमपात् सप्तमीञ्चाभुक्त्वा निचयायाप्यहीनकर्मभ्य आचक्षीत राज्ञा पृष्टस्तेन हि भर्तव्यः श्रुतशीलसम्पन्नश्चेद्धर्मतन्त्रपीडायां तस्याकरणे दोषो दोषः ॥४॥**

विवाहका सिद्धिका लागि तथा धार्मिक कर्मको संयोजनमा शूद्रबाट वा शूद्र बाहेकका अरुसँग धन लिनू । धेरै पशु हुने कर्महीन व्यक्तिसँग, सय गाईका स्वामी तर अग्न्याधान नगर्नेसँग, सोमपान नगर्ने हजार गाईका स्वामीसँग दिनको सात घडीसम्म नखाई धन लिनू । उत्तमकर्म गर्नेहरुसँग पनि सञ्चयका लागि धन लिनू । राजाले सोधे सबै कुरा यथार्थ बताउनू । यदि उ ज्ञान र शीलले सम्पन्न छ भने ति राजाबाटै भरणपोषणको योग्य छ । ब्राह्मणका धर्मकार्यमा बाधा उत्पन्न हुँदा यदि राजा त्यसको निराकरण गर्दैन भने उ दोषी हुन्छ ।

॥ इति गौतमीये धर्मशास्त्रे अष्टादशोऽध्यायः ॥१८॥
॥ गौतमीय शर्मशास्त्र, अठारौं अध्यायको मोहन प्रसाद

सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-१००+४=१०४

शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १०४



## ॥ अथैकोनविंशोऽध्यायः ॥

## अथ प्रतिषिद्धसेवने प्राश्चित्तमीमांसावर्णनम् ।

**उक्तो वर्णधर्मश्चाश्रमधर्मश्चाथ खल्वयं पुरुषो येन कर्मणा लिप्यतेऽथैतद्याज्ययाजनमभक्ष्यभक्षणमवद्यवदनं शिष्टस्याक्रिया तिषिद्धसेवनमिति च तत्र प्रायश्चित्तं कुर्य्यान्नकुर्य्यादिति मीमांसन्ते । न कुर्य्यादित्याहुर्नहि कर्म क्षीयत इति कुर्य्यादित्यपरे पुनस्तोमेनेष्ट्वा पुनः सवनमायातीति विज्ञायते व्रात्यस्तोमेनेष्ट्वा तरति सर्व पाप्मानं तरति ब्रह्महत्यां योऽश्वमेधेन यजतेग्निष्टुताभिशस्यमानं याजयेदिति च ॥१॥**

वर्णधर्म र आश्रमधर्मका विषयमा बताई सकियो । अब यो पुरुष जुन कर्ममा लिप्त हुन्छ निश्चयनै (जस्तै अयोग्यको यज्ञ गराउनू, खान नहुने कुरा खानू, बोल्न नहुने कुरा बोल्नू, उत्तम कर्महरु नगर्नू, गर्न नहुने कर्म गर्नू आदि) यिनका विषयमा प्रायश्चित गरोस् या नगरोस् यसलाई स्मृतिकार मिमांसा गर्दछन् । केही भन्दछन् प्रायश्चित गर्नु पर्दैन किनकि कर्मको क्षय हुँदैन । अन्य भन्दछन् कि प्रायश्चित गर्नु पर्दछ किनकी पुनः स्तोम यज्ञद्वारा यजन गरी पुनः सवनको अधिकारी हुन्छ-यस्तो मानिन्छ । व्रात्यस्तोमले होम गरेपछि सबै पापबाट तर्दछ । जो अश्वमेधले होम गर्दछ उ ब्रह्महत्याबाट तर्दछ तथा जसलाई श्राप लागेको छ उसले अनुष्टुत् यज्ञ गराउनू ।

**तस्य निष्क्रयणानि जपस्तपो होम उपवासो दानमुपनिषदो वेदान्ताः सर्वच्छन्दःसु संहिता मधून्यघमर्षणमथर्वशिरो रुद्राः पुरुषसूक्तं राजतरौहिणे सामनी वृहद्रथन्तरे पुरुषगतिर्महानाम्न्यो**

**महावैराजं महादिवाकीर्त्त्यं ज्येष्ठसाम्नामन्यतमद्बहिष्वमानं कूष्माण्डानि पावमान्यः सावित्री चेति पावमानानि ॥२॥**

त्यो पापी मनुष्यका पापकर्मका बदलामा गरिने कर्म यी हुन्- जप, तप, होम, उपवास, दान, उपनिषद्, वेदान्त, सबै वेदका संहिता, मधु ऋचा, अघमर्षण, अथर्वशिर, शतरुद्रिय, पुरुषसूक्त, राजत तथा रौहिणी साम, बृहत् तथा रथन्तर साम, पुरुषगति, महानाम्नी, महावैराज, महादिवाकीर्त्य, ज्येष्ठ साममध्ये कुनै एक, वहिष्पवमान, कूष्माण्ड, पावमान्य मन्त्र र सावित्री-यी सबैले पवित्र पार्ने हुन्छन् ।

**पयोव्रतता शाकभक्षता फलभक्षता प्रसृतयावको हिरण्यप्राशनं घृतप्राशनं सोमपानमिति च मेध्यानि । सर्वे शिलोच्चयाः सर्वाः स्रवन्त्यः पुण्या ह्रदास्तीर्थानि ऋषिनिवासगोष्ठपरिस्कन्धा इति देशाः ब्रह्मचर्य्यं सत्यवचनं सवनेषूदकोपस्पर्शनमार्द्रवस्त्रताधः शायिताऽनाशक इति तपांसि ॥३॥**

दूधले व्रत गर्नु, साग खाएर बस्नु, फलाहार, अँजुली भरी जौले निर्वाह गर्नु, सुन चाटेर बस्नु, घिउले निर्वाह गर्नु र सोम पान गर्नु-यी सबै पापनाशक कर्म हुन् । सबै पर्वत र नदी, पवित्र ताल, तीर्थ, ऋषि आश्रम, गोठ तथा देवालय-यी सबै पापनाशक स्थान हुन् । ब्रह्मचर्य, साँचो बोल्नु, यज्ञमा स्नान गर्नु, चिसो लुगा लगाउनु, जमिनमा सुत्नु तथा नखानु-यी तप हुन् ।

**हिरण्यं गौर्व्वासोऽश्वो भूमिस्तिला घृतमन्नमिति देयानि । संवत्सरः षण्मासाश्चत्वारस्त्रयो द्वावेकश्चतुर्व्विंशत्यहो द्वादशाहः षडहस्त्र्यहोरात्र इति कालाः । एतान्येवानादेशे विकल्पेन क्रियेरन् । एनःसु गुरुषु गुरूणि लघुषु लघूनि कृच्छ्रातिकृच्छ्रौ चान्द्रायणमिति सर्वप्रायश्चित्तं सर्वप्रायश्चित्तम् ॥४॥**

सुन, गाई, वस्त्र, घोडा, भूमि, तिल घिउ र अन्न-यी दानयोग्य पदार्थ हुन् । वर्ष दिन, छ महिना, चार महिना, तीन महिना, दुई महिना, एक महिना, चौबीस दिन, बाह्र दिन, पाँच दिन, तीन दिन र एक दिन-यी प्रायश्चित, व्रत आदि गरिने समय हुन् । शास्त्रको आदेश नहुँदा पनि मानिसले यसलाई वैकल्पिकरुपमा गर्नू । ठूलो पापमा ठूलै तथा साना पापमा कृच्छ्र, अतिकृच्छ्र, चान्द्रायण आदि सबै थरी प्रायश्चित गर्नू ।

॥ इति गौतमीये धर्मशास्त्रे एकोनविंशोऽध्यायः ॥१९॥
॥ गौतमीय शर्मशास्त्र, उन्नाइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-१०४+४=१०८
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १०८



## ॥ अथ विंशोऽध्यायः ॥
## अथ विविधपापानां कर्मविपाकवर्णनम् ।

**अथ चतुःषष्टिषु यातनास्थानेषु दुःखान्यनुभूय तत्रेमानि लक्षणानि भवन्ति ब्रह्महार्द्रकुष्ठी सुरापः श्यावदन्तो गुरुतल्पगः पङ्गुः स्वर्णहारी कुनखी श्वित्री वस्त्रापहारी हिरण्यहारी दर्दुरी तेजोऽपहारी मण्डली स्नेहापहारी क्षयी तथाजीर्णवानन्नापहारी ज्ञानापहारी मूकः ॥१॥**

चौसठ्ठी वटा यातना दिने ठाउँमा यातना भोगेर पापी यि लक्षण लिएर जन्मन्छ- ब्राह्मणको हत्यागर्ने सुक्खा कुष्ठरोगी, सुरापान गर्ने कलदन्ते, गुरुपत्नीलाई सम्भोग गर्ने लङ्गडो, सुन चोर्ने भद्दा नङको, कपडा चोर श्वेतकुष्ठी, सुन चोरका शरीरमा भ्यागुताका चिह्न भएको, आगो चोरका शरीरमा बाटुला दाद भएको, चिल्ला पदार्थ चोर्ने क्षयरोगी, अन्न चोर्ने अपचको रोगी तथा ज्ञान चोर्ने लाटो हुन्छ ।

**प्रतिहन्ता गुरोरपस्मारी गोघ्नो जात्यन्धः पिशुनः पूतिनासः पूतिवक्त्रस्तु सूचकः शुद्रोपाध्यायः श्वपाकस्त्रपु- सीसचामरविक्रयी मद्यप एकशफविक्रयी मृगव्याधः कुण्डाशी भृतकश्चैलिको वा नक्षत्री चार्वुदी नास्तिको रङ्गोपजीव्यभक्ष्यभक्षी गण्डरी ब्रह्मपुरुषतस्कराणां देशिकः पिण्डितः षण्डो महापथिको चण्डालीपुक्कसी गोष्ववकीर्णी मध्वामेही ॥२॥**

गुरुको हत्या गर्ने छारेरोगी, गाई मार्ने जन्मान्ध, चुकलीखोर नाक गनाउने, दूतको मुख गनाउने, शुद्र पढाउने चाण्डाल, सीसा र चमर बेच्ने र एक खुरे पशु बेच्ने जँड्याहा, पति जिवित छँदै जारबाट जन्मनेको अन्न खाने दास वा भिक्षु, ज्योतिष खटिरे, नास्तिक नाचेर जीवन चलाउने, खान नहुने कुरा खाने गलगाँडे, वेद तथा मानिसलाई चोरबाटो देखाउने नितान्त नपुंसक, लामो यात्रा गर्ने गलगाँडे र चाण्डाल्नी, पुक्कसी, गाईमा वीर्य नाशगर्ने मधुमेहको रोगी हुन्छ ।

**धर्मपत्नीषु स्यान्मैथुनप्रवर्तकः खल्वाटः सगोत्रासमयस्त्र्यभिगामी श्लीपदी पितृमातृभगिनीस्त्र्यभिगाम्यवीजितस्तेषां कुब्जकुण्ठमन्दव्याधितव्यङ्गखरिद्राल्पायुषोऽल्पबुद्धयश्चण्डषण्डशैलूष तस्करपरपुरुषप्रेष्यपरकर्मकराः खल्वाटचक्राङ्गसङ्कीर्णाः क्रूरकर्माणः क्रमशश्चान्त्याश्चोपपद्यन्ते तस्मात् कर्तव्यमेवेह प्रायश्चित्तं विशुद्धैर्लक्षणैर्जायन्ते धर्मस्य धारणादिति धर्मस्य धारणादिति ॥३॥**

आफ्नी धर्मपत्नीलाई अरुबाट मैथुन गराउने तालु खुइले, आफ्नो गोत्रका स्त्री तथा कुसमयमा आफ्नी स्त्रीलाई सम्भोग गर्ने हात्तीपाईले रोगी, बाउआमाका दीदिबहिनी र अन्य स्त्री गमन गर्ने वीर्यहीन हुन्छन् । तिनको पुनर्जन्म कुब्जो, मूर्ख, मन्द रोगी, विकलाङ्ग, दरिद्र, अल्पायू, अल्पबुद्धिकारुपमा हुनेछ । क्रोधी, नपुंसक, नर्तक, चोर, अन्य मानिसको दास, अन्यको सेवक, तालु खुइले, चक्राङ्गी?, वर्णसङ्करले युक्त, क्रूरकर्मी तथा क्रमशः नीच जातिमा जन्मलिने

हुन्छ यसैले यो लोकमा प्रायश्चित गर्नु नै पर्छ । प्रायश्चित गर्नेले धर्मधारण गरेकाले विशुद्ध लक्षण लिई जन्मन्छ ।

॥ इति गौतमीये धर्मशास्त्रे विंशोऽध्यायः ॥२०॥
॥ गौतमीय शर्मशास्त्र, बीसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-१०८+३=१११
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १११



## ॥ अथैकविंशतितमोऽध्यायः ॥
## अथ सर्वपातकेषु शान्तिवर्णनम् ।

त्यजेत् पितरं राजघातकं शूद्रयाजकं वेदविप्लावकं भ्रूणहनं यश्चान्त्यावसायिभिः सह संवसेदन्त्यावसायिन्या वा तस्य विद्यागुरून् योनिसम्बन्धांश्च सन्निपात्य सर्वाण्युदकादीनि प्रेतकर्माणि कुर्य्युः पात्रञ्चास्य विपर्य्यस्येयुः । दासः कर्मकरो वावकरादमेध्यपात्रमानीय दासीघटात्पूरयित्वा दक्षिणामुखः पदा विपर्य्यस्येदमुमनुदकं करोमीति नामग्राहं तं सर्वेऽन्वालभेरन् प्राचीनावीतिनो मुक्तशिखा विद्यागुरवो योनिसम्बन्धाश्च वीक्षेरन्नप उपस्पृश्य ग्रामं प्रविशन्ति । अत ऊद्ध्वं तेन सम्भाष्य तिष्ठेदेकरात्रं जपन् सावित्रीमज्ञानपूर्वं ज्ञानपूर्वञ्चेत्त्रिलात्रम् ॥१॥

राजाको हत्यारा, शुद्रको यज्ञ गराउने, वेद निन्दक तथा भ्रूणघाती बाबुलाई त्याग्नू । जो मानिस नीच जातिका मानिसका साथ वा नीच जातिका स्त्रीसँग बस्दछ उसलाई विद्या दिने गुरुहरु तथा साथीसम्बन्धीलाई भेला गरी सबै जल आदि प्रेतकर्म गर्नु तथा उसका लागिको जलपात्रलाई घोप्ट्याउनू । दास वा सेवकले अपवित्र भाँडो लेराउनू, दासीको घडाको पानीले भरेर र दक्षिणतिर फर्केर अमुम् अनुदकं करोमि यो मन्त्र पढेर नाम लिई त्यसलाई गोडाले

पल्टाइदिनू । अपसव्य भई टुपी खोलेर सबैले उसको हात छुनू । विद्यागुरु तथा नातागोताकाले उसलाई हेर्नू । त्यसपछि जल आचमन गरी गाऊँमा छिर्दछन् । त्यसपछि यदि कोही ऊ सँग अनजानमा बोले भने त ऊ एक रातभर गायत्री जप्दै उभिइरहनू, जानीजानी बोले तीन रातसम्म जप्नू ।

**यस्तु प्रायश्चित्तेन शुद्ध्येत्तस्मिन् शुद्धे शातकुम्भमयं पात्रं पुण्यतमाद्ध्रदात् पूरयित्वा स्रवन्तीभ्यो वा त एनमप उपस्पर्शयेयुः । अथास्मै तत्पात्रं दद्युस्तत् सम्प्रतिगृह्य जपेच्छान्ता द्यौः शान्ता पृथिवी शान्तं शिवमन्तरीक्षं यो रोचनस्तमिह गृह्णामीत्येतैर्यजुर्भिः पावमानीभिस्तरत्मन्दीभिः कूष्माण्डैश्चाज्यं जुहुयाद्धिरण्यं ब्राह्मणाय वा दद्याद् गामाचार्य्याय ॥२॥**

जो प्रायश्चितद्वारा शुद्ध हुन्छ, ऊ शुद्ध भएपछि सुवर्णमय पात्रलाई अत्यन्त पवित्र जलाशय वा नदीहरुबाट भरेर लेराउनु र त्यो जलले नुहाउन लगाउनू । त्यसपछि उसलाई त्यो पात्र दिनू । त्यसलाई लिई उसले-शान्ता द्यौः शान्ता पृथिवी शान्तं शिवमन्तरीक्षं यो रोचनस्तमिह गृह्णामि, तथा पावमानी, तरत्समन्दी एवं कूष्माण्ड आदि यजुमन्त्रको जप गर्नू । घिऊको आहूति दिनू वा ब्राह्मणलाई सुन दान गर्नू र आचार्यलाई गाई दिनू ।

**यस्य तु प्राणान्तिकं प्रायश्चित्तं स मृतः शुद्ध्येत्तस्य सर्वाण्युदकादिनी प्रेतकर्माणि कुर्य्युरेतदेव शान्त्युदकं सर्वेषूपपातकेषु सर्वेषूपपातकेषु ॥३॥**

जसको आजीवन प्रायश्चित गर्नुपर्नेछ उ मरेपछि मात्र शुद्ध हुन्छ । उसका लागि जलदान आदि सबै प्रेतकर्म गर्नू । सबै उपपापमा यो जल-क्रिया शान्तिका लागि हो ।

॥ इति गौतमीये धर्मशास्त्रैकविंशोऽध्यायः ॥२१॥
॥ गौतमीय शर्मशास्त्र, एक्काइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-१११+३=११४

शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ११४



## ॥ अथ द्वाविंशतितमोऽध्यायः ॥
## अथ निषिद्धकर्मणां जन्मान्तरे विपाकवर्णनम् ।

**ब्रह्महसुरापगुरुतल्पगमातृपितृयोनिसम्बन्धगस्तेन नास्तिकनिन्दितकर्माभ्यासिपतितात्याग्यपतितत्यागिनः पतिताः पातकसंयोजकाश्च तैश्चाब्धं समाचरन् । द्विजातिकर्मभ्यो हानिः पतनं परत्र चासिद्धिस्तामेके नरकं त्रीणि प्रथमान्यनिर्देश्यानि मनुर्न स्त्रीष्व गुरुतल्पगः पततीत्येके भ्रूणहनि ॥१॥**

ब्राह्मणघातक, सुरापेयी, गुरुपत्नीगामी, माता र पिता पक्षका स्त्रीलाई सम्भोग गर्ने, चोर, नास्तिक, निन्दित कर्म पटकपटक गर्ने, पतितको त्याग नगर्ने, अपतितको त्याग गर्ने तथा अरुलाई पाप गर्न लगाउने यि पतित हुन्छन् । जो यस्ताका साथ एक वर्ष आचरण गर्दछ उ पनि पतित हुन जान्छ । द्विज-कर्मको हानी र परलोकको असिद्धता नै पतन हो । कसैको मतमा त यही नरक हो । पहिला तीन (ब्रह्महत्या, सुरापान र गुरुपत्नी गमन) लागि प्रायश्चितको निर्देश छैन, यो मनुको मत हो । परस्त्री-गमन आदिका विषयमा यस्तो छैन । कसैकसैको मतमा गुरुपत्नी गमन नगर्ने मानिस पनि भ्रूण हत्या गरेर पतित हुन जान्छ ।

**हीनवर्णसेवायाञ्च स्त्री पतति कौटसाक्ष्यं राजगामिपैशुनं गुरोरनृताभिशंसनं महापातकसमानि अपाङ्क्याानां प्राग्दुर्बलात् ॥२॥**

हीन वर्गको सेवा गर्नाले स्त्री पतित हुन्छे । भूटो साछी, राजाका विषयमा चुगली लगाउनु र गुरुको भूटो निन्दा गर्नु : यी दुष्कर्म पनि महापाप समान

हुन् । पङ्क्तिका लागि अयोग्य ब्राह्मणलाई दुर्बल र असहायभन्दा अगाडी भोजन दिनु पनि महापापका समान हो ।

**गोहन्तृब्रह्मोज्झतन्मन्त्रकृदवकीर्णिपतितसावित्रीकेषूपपातकं याजनाध्यापनादृत्विगाचार्य्यौ पतनीयसेवायाञ्च हेयावन्यत्र हानात् पतति तस्य च प्रतिग्रहीतेत्येके न कर्हिंचिन्मातापित्रोरवृत्तिर्दायन्तु न भजेरन् ॥३॥**

गोहत्या गर्ने, वेदत्याग गर्ने, यस्ताका साथ विचार विमर्श गर्ने, वीर्य नष्ट गर्ने तथा सावित्री पतित हुने हरुलाई उपपाप लाग्छ । यस्ता उपपापीको यज्ञ गराउने र यिनलाई पढाउने तथा पतनयोग्य मानिसको सेवामा लागेका ऋत्विज र आचार्य छोड्न लायक हुन्छन् । जसले त्याग्दैन उ आफैं पतित हुन्छ । कसैको मतमा त यिनलाई दान दिने पनि पतित हुन्छ । तर यस्ता सन्तानबाट आमाबाबु पालिन निषेध छैन परन्तु यस्ता पुत्र तिनको सम्पत्तिको हकदार हुँदैनन् ।

**ब्राह्मणाभिशंसने दोषस्तावान् द्विरनेनसि दुर्बलहिंसायामपि मोचने शक्तश्चेत् अभिक्रुद्ध्यावगोरणं ब्राह्मणस्य वर्षशतमस्वर्ग्यं निघति सहस्रंलोहितदर्शने यावतस्तत्प्रस्कन्द्य पांशून् संगृह्णीयात् संगृह्णीयात् ॥४॥**

ब्राह्मणको निन्दा गर्नमा समान दोष छ । यदि कसैबाट दुर्बलको हिंसा भइरहँदा छुट्याउने शक्ति भएर पनि छुट्याउँदैन भने पनि दोबर पाप लाग्दछ । ब्राह्मण निर्दोष छ भने दोबर पाप लाग्छ । रिसले ब्राह्मणमाथि लौरो उजाए सय र घाउ नै पारे हजार वर्षको नरक पाइन्छ भने रगतै निक्ले त त्यो जमिनमा खसेर जति धूलोका कण भिजाउँछ त्यति नै वर्षको नरक पाइन्छ पाइन्छ ।

॥ इति गौतमीये धर्मशास्त्रे द्वाविंशतितमोऽध्यायः ॥२२॥

॥ गौतमीय शर्मशास्त्र, बाइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-११४+४=११८
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : ११८



## ॥ अथ त्रयोविंशतितमोऽध्यायः ॥
## अथ प्रायश्चित्तवर्णनम् ।

**प्रायश्चित्तमग्नौ सक्तिर्ब्रह्मघ्नस्त्रिरनाच्छादितस्य लक्ष्यं वा स्याज्जन्ये शस्त्रभृताम् । खट्वाङ्गकपालपाणिर्वा द्वादशसंवत्सरान् ब्रह्मचारी भैक्षाय ग्रामं प्रविशेत् स्वकर्माचक्षाणः थोपक्रामेत् संदर्शनादार्यस्य स्थानासनाभ्यां विहरन् सवनेषूदकोपस्पर्शी शुध्येत् प्राणलाभे वा तन्निमित्ते ब्राह्मणस्य द्रव्यापचये वा त्र्यवरं प्रति राज्ञोऽश्वमेधावभृथे वान्ययज्ञेऽप्यग्निष्टुदन्तश्चोत्सृष्टश्चेद् ब्राह्मणवधे । हत्वापि आत्रेय्याश्चैवं गर्भे चाविज्ञाते वा ॥१॥**

ब्राह्मणको हत्या गर्नेको प्रायश्चित आफ्नो शरीरलाई नढाकी अग्निमा तीन पटक प्रवेश हो । वा उ युद्धमा शस्त्रधारीको लक्ष्य बन्नु वा उसले खाटको बार र खप्पर हातमा लिएर बाह्र वर्षसम्म ब्रह्मचारी बनी आफूले गरेको पापकर्म बताउँदै भिक्षाको लागि गाऊँ छिर्नू । सज्जनको दृष्टिबाट जोगिन बाटो छोड्नू । यसरी वनमा जल स्पर्श गर्ने उ घुम्दै स्नान, आसन आदिद्वारा शुद्ध हुन्छ । ब्राह्मणको धन खोसिँदा खोस्ने नीच व्यक्तिको तीन चोटी प्रतिरोध गर्नू, चाहे धन फर्काउन नसकोस् वा एकै पटकको प्रतिरोधमा धन फर्काउन सकोस् वा धन फर्काइदिन नसकेको स्थितिमा आफूसँग भएकोबाट जीवन निर्वाहका लागि उसलाई धन देओस् । यसरी त्यो ब्राह्मणको प्राण बचाउनु तब उ ब्रह्महत्याको पापबाट छुट्दछ । राजाको अश्वमेध यज्ञमा अवभृथ स्नान गरी वा अग्निष्टुत् आदि अन्य कुनै यज्ञमा होम गर्नाले ब्राह्मणवधबाट प्राप्त पापबाट छुट्दछ । रजस्वला स्त्रीको हत्या गरेर पनि यसै जान्नु वा अनजानमा गर्भहत्या गरे पनि यही विधिले पापबाट मुक्त हुन्छ ।

**ब्राह्मणस्य राजन्यवधे षड्वार्षिकं प्राकृतं ब्रह्मचर्यं ऋषभैक सहस्राश्च गा दद्यात् । वैश्ये त्रैवार्षिकं ऋषभैकशताश्च गां दद्यादनात्रेय्याश्चैवं गाश्च । वैश्यवन्मण्डूकनकुलकाकविवरचरमूषिकाश्च । हिंसासु चास्थिमतां सहस्रं हत्वानस्थिमतामनडुद्धारे च । अपि वास्थिमतामेकैकस्मिन् किञ्चित् किञ्चिद्दद्यात्॥२॥**

क्षत्रिय मारे ब्राह्मणलाई छ वर्षको साधारण ब्रह्मचर्य बताइएको छ । उसले एउटा साँढिका साथमा एक हजार गाई दान दिनू । वैश्य मारिए तीन वर्षको ब्रह्मचर्य र एउटा साँढिका साथमा एक सय गाई दान दिनू । शूद्र मारिए एक वर्षको ब्रह्मचर्य र एउटा साँढे सहित दश गाई दान दिनू । रजस्वला नभएकी स्त्री मारे पनि ब्रह्मचर्यको पालना र गाई दान दिनू । वैश्यको हत्यामा जुन प्रायश्चित बताइएको छ भ्यागुता, न्याहुरीमूसो, काग, दूलोमा बस्ने जीव र मूसा मारिँदा पनि त्यही प्रायश्चित गर्नू । हाड हुने जीवको हिंसा हुँदा, हाड नहुने एक हजार जीव मार्दा वा एक छटाक ? जीव हत्यामा यही प्रायश्चित गर्नू । अथवा हाड भएका जीवको हत्या गरे एक-एक हत्याको लागि केहीकेही दान गर्नू ।

**षण्ढे च पलालभारः सीसमाषश्च वराहे घृत घटः सर्पे लोहदण्डो ब्रह्मबन्ध्वाश्च ललनायां जीवो वैशिके न किञ्चित्तल्पान्नधनलाभवधेषु पृथग्वर्षाणि द्वे परदारे त्रीणि श्रोत्रियस्य द्रव्यलाभे चोत्सर्गो यथास्थानं वा गमयेत् प्रतिषिद्धमन्त्रसंयोगे सहस्रवाकश्चेदग्न्युत्सादिनिराकृत्युपपातकेषु चैवं स्त्री चातिचारिणी गुप्ता पिण्डं तु लभेत अमानुषीषु गोवर्जं स्त्रीकृते कूष्माण्डैर्घृतहोमो घृतहोमः ॥३॥**

नपुंसकलाई मारे एक भारी पराल वा एक माशा सीसा, सुँगुर मारे घिऊको घडा, सर्प मारे फलामको लौरो, नीच ब्राह्मणस्त्री मारे कुनै जनावर दानमा दिइन्छ । वेश्या-दलालीलाई मारेर केही पनि दान दिइँदैन । शैया, अन्न तथा धन लाभका लागि गरिएको हत्यामा बेग्लाबेग्लै वर्षदिनसम्म ब्रह्मचर्यको पालना गरिन्छ । परायास्त्रीसँग सम्बन्ध राख्नेलाई मारेर

दुई वर्षसम्म, श्रोत्रियकी स्त्रीसँग सम्बन्ध राख्नेलाई मारेर तीन वर्षसम्म ब्रह्मचर्य रहनू । यदि त्यसको धन पाए त्यसलाई त्याग दिनु वा त्यसलाई उचित ठाउँमा पुऱ्याइदिनू । निषिद्ध मन्त्र पढ्नेका विषयमा यदि कसैले कुनै मन्त्रको एक हजार पदको उच्चारण गरे यज्ञाग्नि निभाउने अथवा पढेको विद्या बिर्सने उपपापमा जुन प्रायश्चित हुन्छ त्यही गर्नू । व्यभिचारिणी स्त्रीलाई बन्दी बनाउनू तर खान पाइराखोस् । गाई बाहेकका निम्न स्त्रीगमन गर्नेलाई जुन पाप लाग्दछ, त्यसको प्रायश्चितका लागि कूष्माण्ड नामका मन्त्रले घिउ होम गर्नू ।

॥ इति गौतमीये धर्मशास्त्रे त्रयोविंशतितमोऽध्यायः ॥२३॥
॥ गौतमीय शर्मशास्त्र, तेइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-११८+३=१२१
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १२१



## ॥ अथ चतुर्विंशतितमोऽध्यायः ॥
## अथ प्रायश्चित्तवर्णनम् ।

**सुरापस्य ब्राह्मणस्योष्णामासिञ्चेयुः सुरामास्ये मृतः शुध्येदमत्या पाने पयोघृतमुदकं वायुं प्रति त्र्यहं तप्तानि स कृच्छ्रस्ततोऽस्य संस्कारः ॥१॥**

सुरापान गर्ने ब्राह्मणका मुखमा तातो रक्सी हाल्नु, उ मरेर शुद्ध हुन्छ । अनजानमा सुरापान गर्दा उसले तीन-तीन दिनका लागि तातो दूध, तातो घिउ र तातो पानी पिउनू र चौथो तीन दिन वायु पिउनू । यो नै तप्तकृच्छ्र व्रत हो । त्यसपछि उसको उपनयन संस्कार गरिदिनू ।

**मूत्रपुरीषरेतसाञ्चप्राशने श्वापदोष्ट्रखराणाञ्चाङ्गस्य ग्राम्यकुक्कुटशूकरयोश्च गन्धाघ्राणे सुरापस्य प्राणायामा घृतप्राशनञ्च पूर्वैश्च दष्टस्य ॥२॥**

मूत्र-मल-वीर्य खाए, जङ्गली शिकारी जनावर-ऊँट-गधाको शरीरको मासु खाए, घर-कुखुरा र सुँगुर खाए वा शराबीको मुखको गन्ध सुँघे वा उक्त जनावरले टोके पनि तीन प्राणायम गरी घिउ खानू ।

**तप्ते लोहशयने गुरुतल्पगः शयीत सूर्मीं वा ज्वलन्तीं श्लिष्योल्लिङ्गं वा सवृषणमुत्कृत्याञ्जलावाधाय दक्षिणाप्रतीचीं व्रजेदजिह्ममाशरीरनिपातान्मृतः शुध्येत्॥३॥**

गुरुपत्नी गमन कर्ताले तताइएको फलामको ओछ्यानमा सुत्नु वा आगोले रातो बनाइएको फलामको स्त्रीलाई अङ्कमाल गर्नू वा अण्डकोष सहित लिङ्ग काटी हातमा लिएर दक्षिण दिशामा हिँड्नू, शरीर नष्ट नभएसम्म निश्छल व्यवहार गर्दै रहनू त्यसपछि मरेर शुद्ध हुन्छ ।

**सखीसयोनिसगोत्राशिष्यभार्यासु स्नुषायां गवि च तल्पसमोऽवकर इत्येके श्वभिरादयेद्राजा हीनवर्णगमने स्त्रियं प्रकाशं पुमांसं खादयेद्यथोक्तं वा गर्दभेनावकीर्णी निर्ऋतिं चतुष्पथे यजेत् तस्याजिनमूर्ध्वबालं परिधाय लोहितपात्रः सप्त गृहान् भैक्षञ्चरेत् कर्माचक्षाणः संवत्सरेण शुध्येत्॥४॥**

स्त्री-साथी, सहोदरा दीदिबहिनी, सगोत्रिया स्त्री, शिष्यकी पत्नी, पुत्रवधू र गाई गमन पनि गुरुपत्नी गमनको प्रायश्चित गर्नू । कसैले ब्रह्मचर्य व्रत-भङ्गको प्रायश्चित गर्नु भन्दछन् । यदि स्त्रीले हीन वर्णका पुरुषबाट सम्भोग गराए राजाले तिनलाई सबैका सामु कुकुरलाई खुवाउनु वा पुरुषलाई यथोक्त प्रकारले कुकुरलाई खुवाउनू । वीर्य नष्ट गर्ने (ब्रह्मचारी) मानिसले चौबाटोमा गधाले निर्ऋतिको पूजा गर्नू । माथि ठडिएको रौं भएको त्यसको छाला ओढी रातो भाँडो हातमा लिई सात घरमा आफूले गरेको कुकर्म भन्दै भिक्षा माग्नू । यसरी वर्ष भरी गर्दा पापबाट मुक्त हुन्छ ।

**रेतःस्कन्दने भये रोगे स्वप्नेऽग्नीन्धनभैक्षचरणानि सप्तरात्रं कृत्वाज्यहोमः साभिसन्धेर्वा रेतस्याभ्यां सूर्याभ्युदिते ब्रह्मचारी तिष्ठेदहरभुञ्जानोऽभ्यस्तमिते च रात्रिं जपन् सावित्रीमशुचि दृष्ट्वादित्यमीक्षेत प्राणायामं कृत्वाऽभोज्यभोजनेऽमेध्यप्राशने वा निष्पुरीषीभावस्त्रिरात्रावरमभोजनं सप्तरात्रं वा स्वयं शीर्णान्युपभुञ्जानः फलान्यनतिक्रामन् प्रमक्पञ्चनखेभ्यश्छर्दनं घृतप्राशनञ्च ॥५॥**

डरले वा विरामीका कारण स्वप्नमा वीर्यस्खलन भए अग्निप्रज्वालन, भिक्षाटन आदि कर्म सात दिनसम्म गरी घिऊले होम गर्नू । जानाजान वीर्यस्खलन गरे यि दुई किसिमले शुद्धि हुन्छ । सूर्य उदाए पछि दिनभर केही नखाई ब्रह्मचारी उभिइ रहनु र दिन लुकेपछि रातभर गायत्री जप्दै समय बिताउनू । अपवित्र वस्तु देखिए प्राणायाम गरेर सूर्यको दर्शन गर्नू । खान नहुने कुरा खाए वा अपवित्र कुरा खाए पेट सफा गर्नू । कम्तिमा तीन दिन भोजन नगर्नू । अथवा पाकेर आफैं खसेको फल लिँदै सात दिन निर्वाह गर्नू । पाँच नङ हुने पशुका खान नहुने कुरा खानेलाई छदाउनू र घिउ ख्वाउनू ।

**आक्रोशानृत सु त्रिरात्रं परमन्तपः सत्यवाक्ये चेद्वारुणीपावमानीभिर्होमो विवाहमैथुननर्मार्तसंयोगेष्वदोषमेकेऽनृतं न तु खलु गुर्वर्थेषु यतः सप्त पुरुषानितश्च परतश्च हन्ति मनसापि गुरोरनृतं वदन्नल्पेष्वप्यर्थे वन्त्यावसायिनीगमने कृच्छ्राब्दोऽमत्या द्वादशरात्रमुदक्यागमने त्रिरात्रं त्रिरात्रम् ॥६॥**

झूटो बोले वा गाली गरे तीन दिन कठोर तपस्या गर्नू । यदि यि कुरा सत्यभाषी माथि गरिएको छ भने वारुणी र पावमानी ऋचाले होम गर्नू । कसैको मतमा विवाह, मैथुन, हाँसख्याल तथा रोगीका लागि झूटो बोल्न दोष छैन । गुरुजनका कार्यमा कहिल्यै झूट नबोल्नू किनकि सानातिना कार्यमा पनि गुरुसँग झूट बोले अघिल्ला र पछिल्ला सात पुस्ता नष्ट हुन्छन् । नीच जातिका स्त्रीलाई सम्भोग गरे एक वर्षसम्म कृच्छ्र व्रत गर्नू । थाहा नपाई गरे बाऱ्ह दिनसम्म यो व्रत गर्नू । रजस्वला गमनमा तीन रात कृच्छ्र व्रत गर्नू ।

॥ इति गौतमीये धर्मशास्त्रे चतुर्विंशतितमोऽध्यायः ॥२४॥
॥ गौतमीय शर्मशास्त्र, चौबिसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-१२१+६=१२७
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १२७



## ॥ अथ पञ्चविंशतितमोऽध्यायः ॥
## अथ रहस्यप्रायश्चित्तवर्णनम् ।

**रहस्यं प्रायश्चित्तमविख्यातदोषस्य चतुर्ऋचं तरत्समन्दीत्यप्सु जपेदप्रतिग्राह्यं प्रतिजिघृक्षन् प्रतिगृह्य वाऽअभोज्यं बुभुक्षमाणः पृथिवीमावपेदृत्वन्तरारमण उदकोपस्पर्शनाच्छुद्धिमेके स्त्रीषु पयोव्रतो वा दशरात्रं घृतेन द्वितीयमद्भिस्तृतीयं दिवादिष्वेकभक्तको जलक्लिन्नवासा लोमानि नखानि त्वचं मांसं शोणितं स्नाय्वस्थि-मज्जानमिति होम आत्मनो मुखे मृत्योरास्ये जुहोमीत्यन्ततः । सर्वेषामेतत् प्रायश्चित्तं भ्रूणहत्यायाः ॥१॥**

थाहा नभएका दोष हुनेका लागि रहस्य प्रायश्चितको विधान हो । उसले तरत्स मन्दी इत्यादि चार ऋचालाई पानी भित्र पसेर जप्नू । जुन वस्तु लिन हुँदैन त्यो लिने चाहना गरे वा लिए, अभोज्य खान खोज्दै गर्दा जमिन दान गर्नू । कसैको मतमा पत्नीका विषयमा ऋतुकाल बाहेक भोग गर्दा आचमन मात्र गर्नाले शुद्धि हुन्छ । (भ्रूणहत्याको प्रायश्चित गर्नेले) दस दिनसम्म दूध पिएर व्रत गर्नू, त्यसपछिका दस दिन घिउले र अरु दस दिन पानीले व्रत गर्नू । पानीले भिजेका लुगा सहित लोमानि, नखानि, त्वचं, मांसं शोणितं, स्नायु, अस्थि, मज्जानं यी पदले प्रत्येकको अन्तमा आत्मनो मुखे मृतोरास्ये जुहोमि स्वाहा भन्दै यी आठ आहूति दिएर होम गर्नू । सबै स्मृतिकारको मतमा भ्रूणहत्याको यही प्रायश्चित हो ।

**अथान्य उक्तो नियमोऽग्ने त्वं पारयेति महाव्याहृतिभिर्जुहुयात् कूष्माण्डैश्चाज्यं तद्व्रत एव वा ब्रह्महत्यासुरापानस्तेयगुरुतल्पेषु प्राणायामैः स्नातोऽघमर्षणं जपेत् सममश्वमेधावभृथेन सावित्रीं वा सहस्रकृत्व आवर्त्तयन् पुनीते हैवात्मानमन्तर्जले वाघमर्षणं त्रिरावर्त्तयन् पापेभ्यो मुच्यते मुच्यते ॥२॥**

फेरी अर्को नियम बताइएको छ "अग्ने त्वं पारय" यो मन्त्रले महाव्याहृति सहित होम गर्नू वा त्यही व्रतमा कूष्माण्ड मन्त्रका साथ होम गर्नू । ब्रह्महत्या, सुरापान, चोरी र गुरुपत्नी गमनको प्रायश्चितमा प्राणायामका साथ स्नान गरी अघमर्षण मन्त्र जप गर्नू । यो अश्वमेध यज्ञको अवभृथ समान हुन्छ । अथवा हजार पटक गायत्री जपेर पवित्र हुन्छ वा आफैं जल भित्र उभिई तीन पटक अघमर्षण मन्त्र दोहोऱ्याउँदा पापबाट मुक्त हुन्छ ।

॥ इति गौतमीये धर्मशास्त्रे पञ्चविंतितमोऽध्यायः ॥२५॥
॥ गौतमीय शर्मशास्त्र, पच्चिसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-१२७+२=१२९
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १२९



## ॥ अथ षड्विंशतितमोऽध्यायः ॥
## अथ प्रायश्चित्तवर्णनम् ।

**तदाहुः कतिधावकीर्णि प्रविशतीति मरुतः प्राणेनेन्द्रं बलेन बृहस्पतिं ब्रह्मवर्चसेनाग्निमेवेतरेण सर्वेणेति सोऽमावास्यायां निश्यग्निमुपसमाधाय प्रायश्चित्ताज्याहुतीर्जुहोति कामावकीर्णोऽस्म्यवकीर्णोऽस्मि कामकामाय स्वाहा कामाभिदुग्धोस्म्यभिदुग्धोऽस्मि कामकामाय स्वाहेति समिधमाधायानु पर्युक्ष्य यज्ञवास्तु कृत्वोपस्थाय**

**सम्मासिञ्चत्वित्येतया त्रिरुप तिष्ठेत त्रय इमे लोका एषां लोकानामभिजित्या अभिक्रान्त्या इत्येतदेवैकषां कर्माधिकृत्ययोः पूत इव स्यात् स इत्थं जुहुयादित्थमनुमन्त्रयेद्वरोदक्षिणेति ॥१॥**

केही यो सोद्धछन् की ब्रह्मचर्य व्रत नष्ट गर्ने मानिस कति भागमा बाँडिएर प्रवेश गर्दछ अर्थात उसका शक्ति कहाँकहाँ जान्छन् ? त्यो प्राणबाट वायुमा प्रवेश गर्दछ, बलबाट इन्द्रमा, ब्रह्मतेजबाट बृहस्पतिमा तथा बाँकी सबैबाट अग्निमा प्रवेश गर्दछ । यसैले उसले औंसीका रातमा अग्निको आधान गरी प्रायश्चितका लागि घिऊका यी दुई आहूति दिन्छ 'कामावकीर्णोऽस्म्यवकीर्णोऽस्मि कामकामाय स्वाहा' र 'कामाभिदुग्धोऽस्म्यभिदुग्धोऽस्मि कामकामाय स्वाहा' ।
समिधा जम्मा पारी चारैतिर जल छर्केर, यज्ञशाला बनाएर, नजिकै उभिई 'सं मा सिञ्चतु' ऋचाले तीन पटक पूजा गर्नू । कसैको मतमा 'त्रय इमे लोका एषां लोकानामभिजित्या अभिक्रान्त्या' यो ऋचाले पवित्र भई आफ्नो कर्म तथा अधिकारमा स्थिर हुनू । उसले यसरी नै होम गर्नू र यसरी नै मन्त्र पाठ गर्नू । सबैभन्दा उत्तम कुरो दक्षिणामा दिनू ।

**प्रायश्चित्तमविशेषादनार्जवपैशुनप्रतिषिद्धाचारानाद्यप्राशनेषु । शूद्रायाञ्च रेतः सिक्त्वा योनौ च  दोषवति कर्मण्यभिसन्धि पूर्वेष्वब्लिङ्गाभिरप उपस्पृशेद्वारुणीभिरन्यैर्वा पवित्रैः प्रतिषिद्धवाङ्मनसयोरपचारे व्याहृतयः संख्याताः पञ्च सर्वास्वपो वाचा मे देहश्च मादित्यश्च पुनातु स्वाहेति प्राता रात्रिश्च मा वरुणश्च पुनात्विति सायमष्टौ वा  समिधमादध्याद्देवकृतस्येति हुत्वैवं सर्वस्मादेनसो मुच्यते मुच्यते ॥२॥**

कुटिलता, चुगलिखोरी, निषेधित आचार र खान नहुने खाने सम्बन्धमा सम्पूर्णरुपले यही प्रायश्चित हो । शूद्राभित्र उनको योनिमा वीर्य सेचन गरेमा तथा जानीजानी दोषी कर्म गरेमा जलका लिङ्ग भएका वरुण देवताका ऋचा अथवा अरु पवित्र मन्त्रले आचमन गर्नू । वचन र मनले गरिएका निषिद्ध दुष्टकर्मको प्रायश्चितमा पाँच व्याहृतिको गणना गरिएको छ ।

यिनका साथमा 'सर्वास्वपो वाचा मे देहश्च मादित्यश्च पुनातु स्वाहा' यो मन्त्रले बिहान अनि 'रात्रिश्च मा वरुणश्च पुनातु' मन्त्रले साँझ आठ समिधाको होम गर्नू र 'देवकृतस्य' यो मन्त्रले होम गर्नू । सबै प्रकारका पापबाट मुक्त हुइन्छ ।

॥ इति गौतमीये धर्मशास्त्रे षड्विंशतितमोऽध्यायः ॥२६॥
॥ गौतमीय शर्मशास्त्र, छब्बिसौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-१२९+२=१३१
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १३१



## ॥ अथ सप्तविंशतितमोऽध्यायः ॥
## अथ कृच्छ्रव्रतविधिवर्णनम् ।

**अथातः कृच्छ्रान् व्याख्यास्यामो हविष्यान् प्रातराशान् भुक्त्वा तिस्रो रात्रीर्नाश्नीयादथापरं त्र्यहं नक्तं भुञ्जीत अथापरं त्र्यहं न कञ्चन याचेताथापरं त्र्यहमुपवसेत्तिष्ठेदहनि रात्रावासीत क्षिप्रकामः सत्यं वदेदनार्यैर्न सम्भाषेत रौरवगोधाजिने नित्यं प्रयुञ्जीतानुसवनमुदकोपस्पर्शनमापोहिष्ठेति तिसृभिः पवित्रवतीभिर्मार्जयेत् हिरण्यवर्णाः शुचयः पावका इत्यष्टाभिः ॥१॥**

अब यसपछि कृच्छ्र व्रतका बारेमा बताउँदछु । बिहान हविष्य खाएर तीन दिनसम्म नखानू । त्यसपछि तीन दिन रातमा खानू । त्यसपछिका तीन दिन खानका लागि कसैसँग केही नमागी (जे भेटिन्छ त्यही खानू) । त्यसपछिका तीन दिन उपवास बस्नू । व्रतका यी सबै प्रक्रियामा दिनमा उभिइरहनू र रातमा बसिरहनू । चाँडै फल चाहनेले साँचो बोल्नू । दुष्टसँग कुराकानी नगर्नू । रुरु मृग र गोहीको छाला नित्य प्रयोग गर्नू । नुहाए पछि 'आपो हिष्ठा' आदि तीन मन्त्रले आचमन गर्नू । 'हिरण्यवर्णाः शुचयः पावकाः' इत्यादि आठ मन्त्रले मार्जन गर्नू ।

**अथोदकतर्पणं ॐ नमो हमाय मोहमाय संहमाय धुन्वते तापसायपुनर्वसवे नमो नमो मौञ्ज्यायौर्व्याय वसुविन्दाय सर्वविन्दाय नमो नमः पाराय सुपाराय महापाराय पारयिष्णवे नमो नमो रुद्राय पशुपतये महते देवाय त्र्यम्बकायैकचराधिपतये हराय शर्वायेशानायोग्राय वज्रिणे घृणिने कपर्द्दिने नमो नमः सूर्यायादित्याय नमो नमो नीलग्रीवाय शितिकण्ठाय नमो नमः कृष्णाय पिङ्गलाय नमो नमो ज्येष्ठाय श्रेष्ठाय वृद्धायेन्द्राय हरिकेशायोर्ध्वरेतसे नमो नमः सत्याय पावकाय पावकवर्णाय कामाय कामरूपिणे नमो नमो दीप्ताय दीप्तरूपिणे नमो नमस्तीक्ष्णरूपिणे नमो नमः सौम्याय सुपुरुषाय महापुरुषाय मध्यमपुरुषायोत्तमपुरुषाय ब्रह्मचारिणे नमो नमश्चन्द्रललाटाय कृत्तिवाससे पिनाकहस्ताय नमो नम इति ॥२॥**

त्यसपछि जलले यसरी तर्पण गरिन्छ–ॐ अहङ्कारी मोहयुक्त, पापनाशक, तापस, पुनर्वसुलाई नमस्कार, पटकपटक नमस्कार । मौञ्ज्य, और्व्य, वसुविन्द, सर्वविन्दलाई पटकपटक नमस्कार । पार, सुपार, महापार, पारविष्णुलाई पटकपटक नमस्कार । रुद्र, पशुपति, महत्, देव, त्र्यम्बक, एकचर, अधिपति, हर, शर्व, ईशान, उग्र, वज्री, घृणी, कपर्द्दीलाई पटकपटक नमस्कार । सूर्य, आदित्यलाई पटकपटक नमस्कार । नीलग्रीव, शितिकण्ठलाई पटकपटक नमस्कार । कृष्ण, पिङ्गललाई पटकपटक नमस्कार । ज्येष्ठ, श्रेष्ठ, वृद्ध, इन्द्र, हरिकेश, ऊर्ध्वरेतालाई पटकपटक नमस्कार । सत्य, पावक, पावकवर्ण, काम, कामरुपीलाई पटकपटक नमस्कार । दीप्त, दीप्तरुपीलाई पटकपटक नमस्कार । तीक्ष्णरुपीलाई पटकपटक नमस्कार । सौम्य, सुपुरुष, महापुरुष, मध्यमपुरुष, उत्तमपुरुष, ब्रह्मचारीलाई पटकपटक नमस्कार । चन्द्रललाट, कृत्तिवास, पिनाकहस्तलाई पटकपटक नमस्कार ।

**एतदेवादित्योपस्थानमेता एवाज्याहुतयो द्वादशरात्रस्यान्ते चरुंश्रपयित्वैताभ्यो देवताभ्यो जुहुयादग्नये स्वाहा सोमाय**

**स्वाहाग्नीषोमाभ्यामिन्द्राग्निभ्याभिन्द्राय विश्वभ्यो देवेभ्यो ब्रह्मणे प्रजापतये अग्नये स्विष्टकृत इति । ततो ब्राह्मणतर्पणम् ॥३॥**

यही सूर्यको पूजा र घिऊको आहूति हो । बाऱ्हौं रात चरु पकाएर यि देवताका लागि होम गर्नु-अग्नये स्वाहा, सोमाय स्वाहा, अग्निषोमाभ्यां स्वाहा, इन्द्राग्निभ्यां स्वाहा, इन्द्राय स्वाहा, विश्वेभ्यो देवेभ्यः स्वाहा, ब्रह्मणे स्वाहा, प्रजापतये स्वाहा, अग्नये स्विष्टकृते स्वाहा । यसपछि ब्राह्मणलाई भोजनले तृप्त पार्नू ।

**एतेनैवातिकृच्छ्रो व्याख्यातो यावत् सकृदाददीत तावदश्नीयादब्भक्षास्तृतीयः स कृच्छ्रातिकृच्छ्रः । प्रथमं चरित्वा शुचिः पूतः कर्मण्यो भवति द्वितीयं चरित्वा यत्किञ्चिदन्यन्महापातकेभ्यः पापं कुरुते तस्मात् प्रमुच्यते तृतीयं चरित्वा सर्वस्मादेनसो मुच्यते अथैतांस्त्रीन् कृच्छ्रान् चरित्वा सर्वेषु वेदेषु स्नातो भवति सर्वैर्देवैर्ज्ञातो भवति यश्चैवं वेद यश्चैवं वेद ॥४॥**

यसैबाट आतिकृच्छ्र व्रतको व्याख्या पनि हुन गयो । जति भोजन एक गाँसमा लिन सकिन्छ त्यति नै खानू अर्थात अतिकृच्छ्रमा एक गाँस खानू । तेश्रो व्रत जुन पानीमात्र पिएर गरिन्छ त्यो कृच्छ्रातिकृच्छ्र भनी चिनिन्छ । प्रथम (कृच्छ्र) व्रत बस्नाले मानिस शुद्ध, पवित्र एवं कर्मगर्न योग्य हुन्छ । दोश्रो (अतिकृच्छ्र) व्रत गर्नाले मानिस महापाप बाहेकका जुन पाप गर्दछ त्यसबाट मुक्त हुन्छ । तेश्रो (कृच्छ्रातिकृच्छ्र) व्रत गर्नाले सबै  पापबाट मुक्त हुन्छ । तथा यी तीनै प्रकारका कृच्छ्र गरी सबै वेदमा स्नात (पढिसके सरह) हुन जान्छ तथा जसले यो जान्दछ उ सबै देवताद्वारा जानिन्छ ।

॥ इति गौतमीये धर्मशास्त्रे सप्तविंशतितमोऽध्यायः ॥२७॥
॥ गौतमीय शर्मशास्त्र, सत्ताइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्टयङ्काः-१३१+४=१३५
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १३५



## ॥ अथाष्टाविंशतितमोऽध्यायः ॥
## अथ चान्द्रायणव्रतविधिवर्णनम् ।

**अथातश्चान्द्रायणं तस्योक्तो विधिः कृच्छ्रे वपनं व्रतञ्चरेत् श्वोभूतां पौर्णमासीमुपवसेदाप्यायस्व सन्ते पयांसि नवो वव इति चैताभिस्तर्पणमाज्यहोमो हविषश्चानुमन्त्रणमुपस्थानं चन्द्रमसो यद्देवा देवहेलनमिति चतसृभिराज्यं जुहुयाद्देवकृतस्येति चान्ते समिद्भिरों भुर्भूवः स्वस्तपः सत्यं यशः श्रीरूर्गिडौजस्तेजः पुरुषो धर्मः शिवः शिव इत्येतैर्ग्रासानुमन्त्रणं प्रतिमन्त्रं मनसा नमः स्वाहेति वा सर्वग्रासप्रमाणमास्याविकारेण ॥१॥**

अब यहाँबाट चान्द्रायण व्रतको विधि बताइन्छ । यसको विधि कृच्छ्रमै पनि बताइएको छ । यसमा विष गरी कपाल खौराउनु र व्रतको पालना गर्नू । आउने पूर्णिमामा उपवास बस्नु । आप्यायस्व समेतु ते (ऋ.१।९१।१६), सं ते पयांसि (ऋ.१।९१।१८) तथा नवो नवो भवति (ऋ.१०।८५।१९) यी ऋचाले तर्पण, आज्यहोम, हविको अनुमन्त्रण तथा चन्द्रमाको पूजा गर्नू । यद् देवा देवहेडनम् इत्यादि चार ऋचा (वा.सं.३०।१४-१७) ले घिउको आहूति दिनू । देवकृतस्यैनसो (वा.सं.८।१३) यो मन्त्रले अन्तमा समिधाका साथ आहूति दिनू । ॐ भूः, ॐ भुवः, ॐ स्वः, ॐ तपः, ॐ सत्यम्, ॐ यशः, ॐ श्रीः, ॐ ऊर्क्, ॐ इडाः, ॐ ओजः, ॐ तेजः, ॐ पुरुषः, ॐ धर्मः, ॐ शिवः, ॐ शिवः यी पन्ध्र मन्त्रले गाँसलाई मन्त्रिनू वा प्रत्येक मन्त्रका साथ मनले नमः स्वाहा उच्चारण गर्नू । सबै गाँसको परिमाण यति हुनु पर्दछ जतिले मुख विकृत नहोस् ।

**चरुभैक्षसक्तुकणयावकशाकपयोदधिघृतमूलफलोदकानि हवींष्युत्तरोत्तरं प्रशस्तानि पौर्णमास्यां पञ्चदश ग्रासान् भुक्त्वैकापचयेन परपक्षमश्नीयादमावास्यायामुपोष्यैकोपचयेन पूर्वपक्षं विपरीतमेकेषाम् ॥२॥**

चरु, भिक्षाको अन्न, सातु, जौको भोजन, साग, दूध, दही, घिउ, कन्दमूल, फलफूल तथा जल यिनको हवि उत्तरोत्तर श्रेष्ठ छ । पूर्णिमामा यिनको आहूति हाले पछि पन्ध्र गाँस खानू र फेरी प्रतिदिन एक-एक गाँस कम गर्दै कृष्णपक्ष भरी खाइ रहनू । औंसीमा उपवास बसी फेरी प्रतिदिन एक-एक गाँस बढाउँदै शुक्लपक्ष भरी खाइरहनू । कसैको मत यसको उल्टो गर्नू अर्थात कृष्णपक्षमा एक-एक गाँस बढाउँदै जानू र शुक्लपक्षमा घटाउँदै जानू भन्ने पनि छ ।

**एष चान्द्रायणो मासो मासमेतमाप्त्वा विपापो विपाप्मा सर्वमेनो हन्ति द्वितीयमाप्त्वा दशपूर्वान् दश वरानात्मानञ्चैकविंशं पङ्क्तेश्च पुनाति संवत्सरं चाप्त्वा चन्द्रमसः सलोकतामाप्नोति सलोकतामाप्नोति ॥३॥**

यो एक महिनाको चान्द्रायण व्रत हो । यसले महिना भरी गरे निष्पाप र निर्दोष भएर मानिसका प्रत्येक पापलाई नष्ट पारि दिन्छ । दोश्रो महिनामा पनि चान्द्रायण व्रत गरे दश पहिलेका र दश पछिका पुस्ता तथा स्वयंलाई समेत गरी कूल एक्काईस तथा जुन ब्राह्मण पङ्क्तिमा बसेर भोजन गर्दछ त्यो पङ्क्तिलाई पवित्र गर्दछ । साथै, वर्षभरी यो व्रत पालना गरे चन्द्रलोकको प्राप्ति हुन्छ हुन्छ ।

॥ इति गौतमीये धर्मशास्त्रे अष्टाविंशतितमोऽध्यायः ॥२८॥
॥ गौतमीय शर्मशास्त्र, अठ्ठाइसौं अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-१३५+३=१३८
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १३८



## ॥ अथैकोनत्रिंशत्तमोऽध्यायः ॥
## अथ पुत्राणां सम्पत्तिविभागवर्णनम् ।

**ऊर्ध्वं पितुः पुत्रा ऋक्थं भजेरन्निवृत्ते रजसि मातुर्जीवति चेच्छति सर्वं वा पूर्वजस्येतरान् बिभृयात् । पूर्ववद्विभागे तु धर्मवृद्धिः विंशतिभागो ज्येष्ठस्य मिथुनमुभयतोदद्युक्तो रथोगोवृषः काणखोटकूटषण्डा मध्यमस्यानेकश्चेदविर्धान्यायसी गृहमनोयुक्तं चतुष्पदाञ्चैकैकं यवीयसः समश्चेतरत् सर्वं द्व्यंशी वा पूर्वजः स्यादेकैकमितरेषामेकैकं वा धनरूपं काम्यं पूर्वः पूर्वो लभेत् दशतः पशुनां नैकशफः नैकशफानां वृषभोऽधिको ज्येष्ठस्य वृषभषोडशा ज्यैष्ठिनेयस्य समं वा ज्यैष्ठिनेयेन यवीयसां प्रतिमातृ वा स्ववर्गे भागविशेषः ॥१॥**

पिताले आफ्नो सबै सम्पत्ति जेठो छोरालाई दिनू यदि उ अरु पुत्रको पालनपोषणको जिम्मा लिन्छ भने । पहिलो तरिकाबाट अंशबण्डा गर्दा धर्मवृद्धि हुन्छ । सम्पत्तिको बीसौं भाग दास तथा दासीका एक जोडी, दुवै तिर दाँत हुने पशुबाट जोतिएको रथ तथा एउटा साँढे यी कुरा जेठोलाई बढी मिलोस् । कानो, लङ्गडो, शिथिल र गोरु माहिलोको भाग हो यदि बाबुसँग सम्पत्ति धेरै छ भने । एउटा भेडा, अन्न, एउटा कवच, भान्छा सहितको घर तथा पशुहरुमध्ये एउटाएउटा कान्छोलाई थप मिलोस् । बाँकी सबै धन सबै भाईमा बराबर मिलोस् अथवा जेठोलाई दुई भाग र बाँकी सबै भाईमा एकएक भाग मिलोस् अथवा प्रत्येक जेठोले आफ्नो इच्छा अनुसार एउटा एउटा धन रोज्नू । पशुहरुमा अनेक खुर भएका पशुमध्ये जेठो छोरोलाई एउटा वृषभ बढी मिलोस् । जेठानीका छोराले वृषभका साथ पन्ध्र वटा गाई पाओस् । बाँकी भाईका भाग पनि जेठानीका पुत्रको बराबर हुन सक्छ । अथवा प्रत्येक माताको स्थिति अनुसार आफ्नो वर्णमा भागविशेष हुन सक्छ ।

**पितोत्सृजेत् पुत्रिकामनपत्योऽग्निं प्रजापतिञ्चेष्ट्वास्मदर्थमपत्यमिति संवाद्याभिसन्धिमात्रात् पुत्रिकेत्येकेषां तत्संशयान्नोपयच्छेदभ्रातृकाम् ॥२॥**

पुत्रहीन पिताले अग्नि र प्रजापतिका लागि यज्ञ गरी आफ्नी छोरी यो भनेर विवाह गर्नु कि यिनबाट जुन छोरो जन्मन्छ त्यो मेरो लागि हुनेछ । केही स्मृतिकारका विचारमा मनको सङ्कल्प मात्रले पनि

पुत्रीलाई पुत्रिकाको रुपमा दिन सकिन्छ । यो शङ्काको कारण भाई नभएका कन्यासँग विवाह नगर्नू ।

**पिण्डगोत्रऋषिसम्बन्धा ऋक्थं भजेरन् स्त्री चानपत्यस्य बीजं वा लिप्सेत देवरवत्यन्यतो जातमभागम् ॥३॥**

मनुष्य मरेपछि पिण्ड, गोत्र तथा ऋषिसँग सम्बन्धित व्यक्ति उसको सम्पत्तिको भागिदार हुन्छ । स्त्रीको कुनै देवर भए उसबाट बीज पाउने इच्छा गर्नू । यदि उनी देवरबाहेक कुनै अरु पुरुषबाट सन्तान पाउँदछे भने त्यो पुत्र आफ्नी आमाको मृत पतिको सम्पत्तिको हकदार हुँदैन ।

**स्त्रीधनं दुहितृणामप्रत्तानामप्रतिष्ठितानाञ्च भगिनीशुल्कं सोदर्याणामूर्ध्वं मातुः पूर्वञ्चैके ॥४॥**

मृत माताको स्त्रीधन उनका छोरीहरुको हुन्छ वा ति विवाहिता पुत्रीहरुको हुन्छ जसको आर्थिक अवस्था राम्रो छैन । दीदिबहिनीको व्ययभार माताको मृत्यु पछि सहोदर दाजुभाईको हुन्छ । कसैको विचारमा मृत्युपूर्व पनि सहोदर दाजुभाईकै हुन्छ ।

**संसृष्टिविभागः प्रेतानां ज्येष्ठस्य संसृष्टिनि प्रेते असंसृष्टी ऋक्थभाग् विभक्तजः पित्र्यमेव । स्वयमर्जितं वैद्योवैद्येभ्यो न दद्यात् अवैद्याः समं विभजेरन् ॥५॥**

यदि कसैले अंश लिएर फेरी साझा व्यापार शुरु गर्दछन् र तिमध्यै कोही बित्दछन् भने त उनको भाग साझेदारी सहित उनको जेठो छोरालाई जान्छ । यदि साझेदारीको धन पाउने जेठो पुत्र पनि बिते त्यो सम्पत्ति त्यो छोरालाई मिल्दछ जो साझेदारीमा छैन । जुन छोरो साझेदारीको धन बाँडेपछि जन्मन्छ उसलाई केवल पैत्रिक धन नै मिल्दछ साझेदारीको धन मिल्दैन । पिताका विद्वान पुत्र आफूले कमाएको धनको स्वयं हकदार हुन्छ

उसका अनपढ दाजुभाई त्यसलाई भाग लगाउन सक्दैनन् । अनपढ भाइहरु आफूले कमाएको धन बराबर बाँड्न सक्दछन् ।

**पुत्रा औरसक्षेत्रजदत्तकृत्रिमगूढोत्पन्नापविद्धा रिक्थभाजः कानीनसहोढपौनर्भवपुत्रिकापुत्रस्वयन्दत्तक्रीता गोत्रभाजश्चतुर्थांशभागिनश्चौरसाद्यभावे ॥६॥**

औरस, क्षेत्रज, दत्त, कृत्रिम, गूढोत्पन्न तथा अपविद्ध-यी छ थरीका पुत्र पिताका सम्पत्तिका हकदार हुन्छन् । कानीन, सहोढ, पौनर्भव, पुत्रिका-पुत्र, स्वयंदत्त र क्रीत-यी छ थरीका पुत्र पिताका गोत्रका हकदार हुन् तथा औरस आदि पुत्रको अभावमा चौथो भागको अधिकारी हुन्छन् ।

**ब्राह्मणस्य राजन्यापुत्रो ज्येष्ठो गुणसम्पन्नस्तुल्यांशभाग् ज्येष्ठांशहीनमन्यत् राजन्यावैश्यापुत्रसमवाये स यथा ब्राह्मणीपुत्रेण क्षत्रियाच्चेत् शूद्रापुत्रोऽप्यनपत्यस्य शुश्रूषुश्चेल्लभेत वृत्तिमूलमन्तेवासिविधिना सवर्णापुत्रोऽप्यन्यायवृत्तो न लभेतैकेषां श्रोत्रिया ब्राह्मणस्यानपत्यस्य रिक्थं भजेरन् राजेतरेषां जडक्लीवौ भर्त्तव्यावपत्यं जडस्य भागार्हं शूद्रापुत्रवत् प्रतिलोमास्तू दकयोगक्षेमकृतान्नेष्वविभागः स्त्रीषु च संयुक्तासु ॥७॥**

ब्राह्मणको क्षत्रिय स्त्रीमा उत्पन्न पुत्र यदि उ जेठो छ भने तथा गुण सम्पन्न छ भने त ब्राह्मण पत्नीबाट उत्पन्न पुत्रका समान अंशको हकदार हुन्छ । यदि उ उपर्युक्त गुण सम्पन्न छैन भने उसलाई ज्येष्ठताको आधारमा मिल्ने अतिरिक्त अंश प्राप्त हुँदैन । यदि ब्राह्मणका क्षत्रिया तथा वैश्या स्त्रीबाट पनि पुत्र छन् भने त्यो क्षत्रियाबाट जन्मेको पुत्र ब्राह्मणबाट जन्मेको पुत्रसरह पैत्रिक सम्पत्तिको हकदार हुन्छ । क्षत्रियबाट शुद्रामा जन्माइएको तथा पिताको सेवा गर्ने पुत्र यदि पिताका अरु कुनै सन्तान छैनन् भने पिताका साथ रहने हुनाले आजीविका मात्रको अधिकारी हुन्छ । कसैको मत छ कि सवर्णाका छोरा पनि यदि उ अन्यायको बाटोमा छ भने त बाबुको सम्पत्तीको भाग प्राप्त नगरोस् । सन्तानहीन ब्राह्मणको सम्पत्ति वेदपाठी ब्राह्मणलाई मिलोस् । अरुको सम्पत्ति

राजालाई मिलोस् । बाबुले जड र नपुंसक पुत्रको पालनपोषण गर्नु । जडका सन्तान पनि अंशका हकदार हुन् । प्रतिलोम पुत्र शूद्रा स्त्रीबाट जन्मने पुत्रका समान हकदार हुन्छन् । जल, योग तथा क्षेमका वस्तु, पकाइएको अन्न तथा समूहमा रहने स्त्री (संयुक्त परिवार) को भागबण्डा हुँदैन ।

**अनाज्ञाते दशावरैः शिष्टैरूहवद्भिरलुब्धैः प्रशस्तं कार्यम् । चत्वारश्चतुर्णां पारगा वेदानां प्रागुत्तमात्त्रय आश्रमिणः पृथग्धर्मविदस्त्रय एतान् दशावरान् परिषदित्याचक्षते । असम्भवे त्वेतेषां श्रोत्रियो वेदविच्छिष्टो विप्रतिपत्तौ यदाह यतोऽयमप्रमवो भूतानां हिंसानुग्रहयोगेषु धर्मिणां विशेषेण स्वर्गं लोकं धर्मविदाप्नोति ज्ञानाभिनिवेशाभ्यामिति धर्मो धर्मः ॥८॥**

विधान थाहा छैन भने कममा दश जना विचारशील निर्लोभी शिष्ट व्यक्तिहरुले त्यसको निर्णय गर्नू । यिनमा चार वेदका चार श्रेष्ठ पारङ्गत विद्वान, तीनै आश्रम ब्रह्मचर्य, गृहस्थ र वानप्रस्थका एक-एक जना विद्वान तथा फरकफरक धर्म जान्ने तीन विद्वान हुनु पर्दछ । यि कमसे कम दश मिले पछि परिषद् हुन्छ । यस्तो संयोग असम्भव भए श्रोत्रिय, वेदविद्, शिष्ट व्यक्ति सन्देहास्पद विषयमा जे भन्दछन् त्यही प्रमाण हो किनकी यसलोकमा हिंसा, अनुग्रह आदिका विषयमा विशेषरुपले धर्म जान्ने प्राणी अती बिरलै जन्मन्छन् । धर्मलाई जान्ने मानिसले नै आफ्नो ज्ञान तथा तत्परताका कारण स्वर्गलोक पाउँछ । यही धर्म हो ।

॥ इति गौतमीये धर्मशास्त्रे एकोनत्रिंशत्तमोऽध्यायः ॥२९॥
॥ गौतमीय शर्मशास्त्र, उनन्तिसौँ अध्यायको मोहन प्रसाद सापकोटाद्वारा गरिएको भावानुवाद समाप्त भयो ॥



आदितः गद्यपद्यानां समष्ट्यङ्काः-१३८+८=१४६
शुरुदेखिका गद्यपद्यको सङ्ख्या : १४६



॥ समाप्ता चेयं गौतमस्मृतिः ॥
॥ गौतमस्मृतिको नेपालीमा भावानुवाद सकियो ॥
सबैको कल्याण होस् !